


आइतबार • १० कात्तिक २०७६ • मूल्य रु. २५




# नेपाल

राष्ट्रिय साप्ताहिक

# ड्र्यागनको पदचाप

सी चिनफिङ भ्रमणको भूराजनीतिक तरंग



www.rbb.com.np

# घेरै दिने भनेकै आफ्नैले त हो नि !

आफ्नो भनेको आफ्नै हुन्छ



मुद्दती खातामा

**९.२५%***

वार्षिक ब्याजदर

*०.५० प्रतिशत शाखा कार्यालयबाट नै थप गर्न सकिने

**RBB GOLDEN**
**FIXED DEPOSIT ACCOUNT**

आधुनिक बैकिङ्ग सेवा सुविधाहरू उपलब्ध

## राष्ट्रिय वाणिज्य बैंकमा गोल्डन मुद्दती (व्यक्तिगत) खाता खोली उच्चतम ब्याजदर पाउनुहोस् ।

**विशेषताहरू:**

» १ वर्ष देखि २ वर्ष सम्म

» न्युनतम मौजदात रू.५ लाख » त्रैमासिक ब्याज भुक्तानी

तपाईको आफ्नै बैंक



राष्ट्रिय वाणिज्य बैंक लि.
RASTRIYA BANIJYA BANK LTD.
...तपाईको आफ्नै बैंक

राष्ट्रिय वाणिज्य बैंक लि. केन्द्रिय कार्यालय, सिंहदरबार प्लाजा, काठमाण्डौ । फोनः (९७७-१) ४२५-२५९५ । फ्याक्सः (९७७-१) ४२५-२९३१ । इमेल: rbb.info@rbb.com.np










नेपाल गुणस्तर
प्रमाण चिन्हद्वारा सम्मानित ।

8mm देखि 32mm
सम्मको Size मा




Fe500
gradesteels

UTM
TESTED

TMT STEEL BARS

K. L. DUGAR GROUP

SKYWORTH

# SKYWORTH GRAND

# ।। छुट उत्सव ।।

SKYWORTH सँग सबै दङ्ग
30% सम्म छुट पाइ सबै फुरुङ्ग



यो दशैं तिहारमा हरेक SKYWORTH खरिद गर्दा ३०%* सम्मको छुट पाइ छुटको उत्सव मनाउनुहोस् ।

*सर्तहरु लागू हुनेछन् ।



Smart Appliances P Limited

COMPANY SHOWROOM: KATHMANDU: CHARKHAL, DILLIBAZAR: 01-4436920 | CORPORATE OFFICE: CHARKHAL, DILLIBAZAR, KATHMANDU, TEL: 01-4443119
BIRATNAGAR: JAIN BHAWAN, MAIN ROAD: 9801305494 | FOR SERVICE: TOLL FREE NO.: 16600110090 | FOR DEALERSHIP: 9801105114

भित्र
आइतबार, १० कात्तिक २०७६ (वर्ष २०, अंक १२)
Nepal National Weekly, 27 Oct 2019 (Vol. 20, No. 12)



# चिनियाँ ड्र्यागनका पदचापहरू





## 'मेरो जीवन सकिएको छैन'

## सम्पादकीय

# भूराजनीतिमा निर्णायक दिशानिर्देश

उदीयमान शक्तिराष्ट्रबाट महाशक्ति बन्ने दिशाउन्मुख चीनका राष्ट्रपति सी चिनफिङ अघिल्लो साता काठमाडौं ओर्लंदै गर्दा उनका पदचापहरू देशान्तरसम्म सुनिएका छन् । विगतमा एकअर्काको शुभेच्छुकका रूपमा देखिएका दुवैतर्फका नेतृत्वहरू खुलेर अब कनेक्टिभिटी, विकास, सुरक्षा सहकार्य, जनस्तरका सम्बन्ध आदिमा रणनीतिक साझेदारीको दिशामा अग्रसर हुने वातावरण बन्दै गर्दा भूराजनीतिक वृत्तमा तरंग उठ्नु स्वाभाविक छ ।

छिमेकमै रहेर पनि नेपालले २३ वर्षसम्म चिनियाँ उच्च भ्रमणको प्राथमिकता पाउन सकेको थिएन । बीचका यी वर्षहरूमा चीन भूगोल र जनसंख्याले विशालतम देश त छँदै थियो । तर विश्वकै पहिलो ठूलो अर्थतन्त्र बन्दै सैन्य-सामरिक आयतन र पुरानो रेशममार्ग ब्युँताउने बीआरआई कूटनीतिमार्फत मौजुदा महाशक्ति अमेरिकालाई चुनौती दिने हैसियतमा उक्लियो । चिनियाँ कम्युनिस्ट पार्टीको १९ औं महाधिवेशनमार्फत थप शक्ति सञ्चित गर्दै सर्वकालीन महासचिव बन्न पुगेका सी अहिले 'सी विचारधारा' मार्फत आफूलाई थप प्रभावी बनाउन प्रवृत्त छन् । तिनै सीको बहुप्रतीक्षित भ्रमणलाई लिएर काठमाडौंमा चल्ने आकलन र संशयहरू अब सकिएका छन् किनभने आफैंले नेपाल उनी चीनका लागि निकै प्राथमिक रहेको सन्देश प्रवाहित हुने गरी कूटनीतिक हाउभाउ पेस गरे ।

चीनले नेपालसँगको सधैंको मित्रतालाई अब रणनीतिक साझेदारीका रूपमा विकास गर्ने घोषणा गरेको छ । भूपरिवेष्ठित हुनुको पीडाबाट नेपाललाई मुक्त गर्दै रेल, सडकमार्फत भूजडित बनाई छाड्ने सीले बताए । अनि नेपालको सार्वभौमिकता र अखण्डताको विषयलाई निकट मित्रका हिसाबले सधैं सम्मान गर्ने भनाइ फेरि दोहोर्‍याए । चिनियाँ भ्रमण टोलीका शृंखलाबद्ध वार्तापछि जारी संयुक्त वक्तव्यमा आर्थिक विकासलाई उच्च गति दिइने उल्लेख छ । बीआरआईको नेपाली संस्करणका रूपमा ट्रान्स हिमालयन मल्टिडाइमेन्सनल कनेक्टिभिटीमार्फत द्विदेशीय सम्बन्ध अघि बढ्ने मार्गचित्र कोरिएको छ । सीले नेपाली जनतासँग चिनियाँ जनताको स्तरमा सम्बन्ध उकास्ने अनि सुरक्षालगायत संवेदनशील विषयमा रणनीतिक सहकार्य गर्ने उल्लेख गर्दै गर्दा हालसम्मको भूराजनीतिक अवस्थामा आधारभूत हलचल आउने आकलन गर्न सकिन्छ ।

कुरो यत्तिमा सकिन्न । चीनले यसअघि पनि नेपालसँग विभिन्न चरणमा भएका छलफलको निष्कर्ष संकेतमा सुनाएको छ । सीले घुमाउरो पारामा बोल्दै नेपालसँग समझदारीको कार्यान्वयनमा शंका जनाएका छन् । यसतर्फ व्यवहारबाटै स्पष्ट पार्ने दायित्व नेपालको छ । र, कहिले दक्षिणतर्फ अनि कहिले उत्तरतर्फ ढल्कँदै आएको भनी नेपाली नेतृत्वमाथि विगतमा लाग्दै आएका आरोपभन्दा माथि उठेर स्वायत्त र आत्मविश्वासपूर्ण कूटनीति सञ्चालनमा तत्परता देखाउने बेलासमेत नेपालसामु आएको यो भ्रमणले प्रस्ट गरेको छ । नेपालमा लामो संक्रमणकाल र त्यससँगै जोडिएका राजनीतिक अलमलहरू सकिएपछि शान्त र स्पष्ट राजनीतिक माहोलमा चिनियाँ राष्ट्रपतिको भ्रमण भएको छ । यसप्रति अन्य छिमेकी र विश्व शक्तिकेन्द्रहरूका आफ्नै खाले रुचि देखिएका छन् । भूगोलमा मझौला आकारको भएर पनि नेपालसँग निहित भूसामरिक संवेदनशीलता नै यसको कारक हो ।

तसर्थ, विगतभन्दा अझै संवेदनशील र सतर्क भएर नेपाल सरकार, यहाँका राजनीतिक पार्टीहरू परराष्ट्र मामिला सञ्चालनमा अग्रसर हुनुपर्छ । हाम्रा मतभेदहरू हामीभित्रै छन् । राष्ट्रिय स्वार्थको परिभाषा र त्यसको संरक्षणमा नेपाली नेतृत्व एकजुट भएर लागिपर्ने अपेक्षा नागरिकहरूले राख्नु यो बेला प्रासंगिक हुन्छ ।





कान्तिपुर पब्लिकेसन्सका लागि अध्यक्ष तथा प्रबन्ध निर्देशक : **कैलाश सिरोहिया** निर्देशक : **स्वस्तिका सिरोहिया** सम्पादक : **बसन्त बस्नेत** सहायक सम्पादक : **सन्तोष आचार्य** नायब प्रमुख संवाददाता : **राजकुमार बानियाँ** वरिष्ठ संवाददाता : **जनक नेपाल, माधव बस्नेत** सहायक वरिष्ठ संवाददाता : **योगेश ढकाल, मनबहादुर बस्नेत, गोकर्ण गौतम** संवाददाता : **सुनिता लोहनी, यम बम** डेस्क : **गोकुल अर्याल, गुरुङ सुशान्त** डिजिटल : **रविराज बराल** तस्बिर : **रवि मानन्धर** (संयोजन), **सरोज बैजु** सज्जा : **चन्द्रकुमार प्रजापति** (संयोजन), **घनश्याम डंगोल, यमन मानन्धर, सुनीता अधिकारी** कार्टुन/ग्राफिक्स : **रवीन्द्र मानन्धर** मार्केटिङ : **असुरारी ज्ञवाली, सन्तोष ढकाल**

कान्तिपुर पब्लिकेसन्स (प्रा.) लि., सेन्ट्रल बिजनेस पार्क, थापाथली, काठमाडौं, पो.ब.नं. ८५५९, फोन नं : ५१३५००० (एक्सटे. १६२२), फ्याक्स : ५१३५०२५, विज्ञापन : ५१३५००० (एक्सटे. ११०७), ग्राहक सेवा : ५१३५००० (एक्सटे. १२१३), इमेल : nepalmag@kmg.com.np, पृथ्वी प्रिन्टिङ प्रेस (प्रा.) लि. काठमाडौंमा मुद्रित, प्रकाशन मिति : ३ कात्तिक २०७६, का.जि.द.नं. १०४/०५६/५७ म.क्षे.हु.नि.का.द.नं. २/०५७/५८

## स्थानीयको साझेदारी

राष्ट्रिय निकुन्ज छेउछाउ बस्ने स्थानीयको जीविकोपार्जनको स्रोत बन्दै आएका वनजंगलभित्रका वन्यजन्तुको आक्रमणले बर्सेनि घाइते तथा मृत्यु हुनेको संख्या बढेको छ *(वस्ती जोगाउने कि वन्यजन्तु, ३ कात्तिक)* । आरक्षभित्रका जनावरले वस्ती छेउका घरघर पुगेर स्थानीयले पालेका गाई-भैंसी, बाखा खाइदिन्छन् । स्थानीयले लगाएका अन्नपातसमेत जंगली हात्तीले सखाप पार्ने क्रम जारी छ ।

आरक्ष संरक्षणमा सरकारले नेपाली सेना, वन विभागका कर्मचारी खटाएको छ । तर आरक्षभित्रका जनावर गाउँ पसेर स्थानीयको दैनिकी खल्बल्याइरहेका हुन्छन् । वन रेखदेखको जिम्मा पाएका सरकारी निकायले स्थानीयसँग सहकार्य गरे वन्यजन्तुको आक्रमण केही कम हुन सक्थ्यो ।

■ **बुद्धिबहादुर प्रजा**

*माडी नगरपालिका, चितवन*

## वन नासिने डर

झापामा मात्र नभएर मुलुकभर नै धार्मिक मठमन्दिर बनाई सामुदायिक वन कब्जा गर्ने क्रम बढेको छ *(जंगलमा रजाइँ, ३ कात्तिक)* । चाहे हिन्दु हुन् वा बौद्ध, जुनसुकै धर्म सम्प्रदायले सामुदायिक वन मासेर मन्दिर बनाइरहेका छन् ।

देवीदेवता, खेलमैदान, सुकुम्बासीका नाममा सामुदायिक वनको दोहोन यसरी नै बढ्दै गए समुदायको मुख्य आम्दानी स्रोत पनि घट्ने निश्चित छ । विभिन्न धर्मभीरू अगुवासँग छलफल गरेरै सामुदायिक वनभित्र बनाइएका मठमन्दिर, सार्वजनिक स्थललाई अन्यत्र सार्न सकिने विकल्पचाहिँ छ ।

■ **अन्जना कुमाल**

*अर्जुनधारा नगरपालिका, झापा*

## अन्तर्राष्ट्रिय प्रसिद्धि

बुसान, टोरन्टोजस्ता फोरममा नेपाली फिल्म प्रतिस्पर्धामा उत्रिन थाल्नु सुखद संकेत हो *(बिस्तारै विश्वमञ्चमा, ३ कात्तिक)* । ५५ वर्षको इतिहास बोकेको नेपाली फिल्म क्षेत्रले अन्तर्राष्ट्रिय प्रतिस्पर्धामा सहभागी भएर पुरस्कृत हुनु हामी सबैका लागि गौरवको विषय मानिनुपर्छ ।

नेपालभित्रै फिल्मको बजार चौपट रहेको अवस्थामा अन्तर्राष्ट्रिय मञ्चमा प्रतिस्पर्धा गर्ने नेपाली चलचित्र पनि बन्दा रहेछन् भन्दा खुसी लाग्यो । फिल्म क्षेत्रलाई सरकारले नै संरक्षण गरिदिए नेपाली चलचित्र विश्वबजारमा बिक्न सक्छन् ।

■ **लक्ष्मण केसी**

*स्युचाटार, काठमाडौं*




**प्रतिक्रियाका लागि**
nepalpatra@kmg.com.np

**लेख रचनाका लागि**
nepalmag@kmg.com.np

@NepalMagazine
@NepalMagazine
@nepalmagazine

### ट्वीट




**मध्यस्थताको महाजाल**
Ratna sansar Shrestha@rsansar

मानिसलाई ज्योति स्पिनिङ मिलमा सर्वसाधारणको लगानी डुबेको जानकारी छ तर ज्योति यार्न प्रोसेसिङ प्रालिमा भएको घपला बिरलैलाई मात्र जानकारी छ । समाचार प्रकाशित गरेकामा नेपाल म्यागजिनलाई धन्यवाद ।




**हिमाली स्याउको मार्फा ब्रान्ड**
Krishna Ghimire@kghimire1

त्यो बेला यातायात सहज थिएन । कतिपय ठाउँमा स्याउ सडेर बाटो नै दुर्गन्धित हुन्थ्यो । लुलु, चौँरीले पनि त्यति रूचाउँदैन थिए । उत्तम उपाय रक्सी थियो । अहिले बाटो छ, बजार जोडिएको छ । ब्रान्डी मुस्ताङको उत्तम । जुम्ली उत्पादन फुंग स्पिरिट गन्हाउने । मुस्ताङबाट सिके हुने ।




**नेकपा सांसद पार्वत गुरुङलाई पक्राउ पुर्जी**
Prakash Rimal@rimalprakash

पुंजीगत खर्च पनि ज्यूंका त्यूं छ, सुको खर्च भा'छैन भन्दा नि हुन्छ । यता सत्ताधारी नेकपाका सांसद पार्वत गुरुङलाई पनि पक्राउ पुर्जी जारी भएछ । अब धमाधम जेल बनाउनुपर्छजस्तो छ ।




**छाडेको बाटोको माया**
Jyoti Danuwar@DanuwarJyoti

अशोक राईलाई पार्टीभित्र सजावटी देख्नु दृष्टिदोष हो । खसआर्य र मधेसी क्लस्टरको बीचमा अशोक राई निर्णायक समन्वयकर्ता हो भन्नु ठीक हुन्छ बरू । पार्टीभित्र र बाहिर पनि । पहिचानको सिंगो मुद्दाको अब एकल उत्तराधिकारी कोही छ भने त्यो हो- अशोक राई ।




**हवल्दार सुकबहादुर**
Mahesh Shrestha@Bhajumahesh

छापामारको छोरो १ र २ पढेको भए यो कथा नि पढ्नुस् । नपढेको भए नि पढ्नुस् । महेशविक्रम शाहका कथाहरू सधैं उम्दा लाग्छन् ।

### पोस्ट






**नेकपा सांसद पार्वत गुरुङलाई पक्राउ पुर्जी**
Krishna Lamsal

माननीयज्यूहरू सबै परेछन् कि क्या हो । पक्राउ पुर्जी जारी मात्रै समाचार आउँछ त ।




Purushottom Panta bhardwaj

यो संसद् त सबै अपराधीहरूको जमघट हुने ठाउँ पो रैछ ।




Nabraj Shrestha

पूर्वमाओवादी र पूर्वएमालेहरूको भाले जुधाइ देखिँदैछ अब ।




**मध्यस्थताको महाजाल**
Nabin Khatri

सर्वोच्चका न्यायाधीशहरूलाई किनेर राखेका रहेछन् । अनि खारेज गरिहाल्छन् नि । विचरा कति घुमाएका !

GHORAHI
CEMENT INDUSTRY

ISO 9001:2015
ISO 14001:2015
ISO 45001:2018
Certified Company

TRIVENI
A Promise for Life

# सगरमाथा सिमेन्ट

जुनी जुनीलाई...



**शुभ दिपावली तथा छठ पर्वको उपलक्ष्यमा समस्त नेपाली दाजुभाई तथा दिदी बहिनीहरुलाई सुख, शान्ति र समृद्धिको शुभकामना व्यक्त गर्दछौं ।**




www.ghorahicement.com.np | www.facebook.com/ghorahi.cement

# प्रवेश

## सोझै




## साताका चर्चित



**टिस्टा प्रसाई र प्रतिभा पाण्डे**
वैज्ञानिक



युनेस्कोअन्तर्गतको अर्गनाइजेसन फर वुमेन इन साइन्स फर द डेभलपिङ वर्ल्डद्वारा ५०-५० हजार डलरको फेलोसिप ।



**शुक्रबहादुर राई**
गल्फर



२८ औं भुटान ओपन एमेच्योर गल्फ च्याम्पियनसिपको उपाधि ।



**दुर्गा बुढा**
धावक



भारतको ५९ औं राष्ट्रिय खुला एथलेटिक्स च्याम्पियनसिपअन्तर्गत ३ हजार मिटर स्टिपलचेसमा स्वर्ण पदक ।



**नेपाली सेना**



बेलायतमा भएको ३४ देश सहभागी संयुक्त सैन्य अभ्यास 'क्याब्रियन पट्रोल-२०१९' मा स्वर्ण पदक ।



**मोहम्मद आफताव आलम**
कांग्रेस सांसद



बम विस्फोटका घाइतेलाई इँटाभट्टामा जलाएर मारेको आरोपमा संलग्नताको पुष्टिपछि पक्राउ ।

## मुलुकबाहिर

# 'डेथ रोड' मा स्काई रेस



अंग्रेजीमा एउटा भनाइ छ, एज इज जस्ट अ नम्बर । त्यस्तै, नेपाली लोक आहान छ, खाने मुखलाई जुँगालाई छेक्दैन ।

बोलिभियाली यो कथाकी पात्र हुन्- ७० वर्षीया हजुरआमा मिर्था मिनोज । उनले साइकल चलाएर बोलिभियाको 'डेथ रोड' भनेर चिनिने ६० किलोमिटरको स्काई रेस पूरा गरेकी छन् । उनले तल्लो सतहको जंगलदेखि हिउँले ढाकेको एन्डेज पहाडसम्मको साहसिक भिरालो यात्रा पूरा गरेको *रोयटर्सडटकमले* जनाएको छ ।

साइकल प्रतिस्पर्धाका लागि उक्त ११ हजार फिट घुमाउरो रूट विश्वकै सबैभन्दा खतरनाक मानिन्छ ।

उक्त सडकले हालसम्म हजारौं मानिसको ज्यान लिइसकेको छ । तर मिर्थाका लागि भने यो रूटमाथिको फतेह मुनासिब छ । वर्षौं पहिले छोराको मृत्युपछि परिवार र मनोचिकित्सकको सल्लाहमा उनले बाइक कुदाउन थालेकी हुन् । 'डाक्टरले मलाई पीडाबाट मुक्ति दिन्छ र पुनर्सञ्चार गराउँछ भनेका थिए,' रेस समाप्तिपछि खुसी व्यक्त गर्दै उनले *रोयटर्स*सँग भनिन्, 'यो चढाइ भिरालो थियो । कुनै आरामबिना माथि, अझ माथि जानुपर्ने ।' ने




## त्यस बखतको नेपाल




### माओवादी पर्दापछाडि को-को लुकेका छन् ?

अहिले सत्ताधारी दलमा 'वार्ता थ्योरी' को प्रवर्तक बनेर हिँड्नुभएका भट्टराईको कार्यकालमा हालसम्म प्रहरीद्वारा मारिएकामध्ये कुल संख्याको ३३.५२ र माओवादीद्वारा हत्या गरिएकामध्ये ४०.८९ प्रतिशत वहाँकै पालामा भएका घटना हुन् (हेर्नुस्, संलग्न चार्ट) । हिंसा भट्टराईको पालामा अत्यधिक थियो भन्ने कुरा जति सत्य हो, त्यत्तिकै सत्य हो- वहाँको पालामा माओवादीसित वार्ताका लागि बन्न थालेको सकारात्मक वातावरण। प्रधानमन्त्री छँदै भट्टराईले 'हिमालय होटल' मा एक माओवादी प्रतिनिधिलाई समेत भेट्नुभएको बताइन्छ। नेकपा एमाले पनि माओवादी समस्याका विषयमा सत्तामा हुँदा र नहुँदा दुई थरी कुरा गर्दछ भन्ने कुरा पछिल्लो पटक त्यो पार्टी सत्तामा हुँदा तत्कालीन उपप्रधानमन्त्रीले ल्याउन आँटेको आतंकवाद विरोधी विधेयकबाट थाहा हुन्छ। आज पनि माओवादी सम्बन्धमा ठोस नीति बनाउन एमालेलाई त्यति सजिलो छैन। भित्री मनमा उसलाई डर छ, कतै आफ्ना कार्यकर्ता 'सक्कली कम्युनिस्ट' को खोजीमा माओवादीतिर आकर्षित नहोऊन्। अथवा कथमकदाचित् कुनै दिन नेकपा माओवादी आफ्ना कार्यक्रमसहित संसदीय निर्वाचनमा ओर्लियो भने त्यसबाट पर्ने संभाव्य परिणामबाट पनि एमाले नेतृत्व मनमनै त्रसित छ।

***नेपाल, १६ असोज-१५ कात्तिक, ०५७***

# चिनियाँ मार्ग



सुरेश किरण

थाहा भएकै कुरा हो, नेपाल चीन र भारतको बीचमा च्यापिएको छ । भौगोलिक रूपमा मात्र होइन, कूटनीतिक र राजनीतिक रूपमा पनि त्यत्तिकै च्यापिएको छ । तर पनि धेरैको आरोप छ, नेपाल भारतले जता हिंड् भन्छ, त्यहीं हिंड्छ । अर्थात्, भारतकै बाटोमा मात्र नेपाल हिंड्ने गर्छ । तर चीन चाहन्छ, नेपाल भारतको बाटोमा मात्र होइन, आफ्नो बाटोमा पनि हिंड्ने गरोस् । यसका लागि चीनले प्रयास त धेरै अघिदेखि नै गरिरहेको हो । तर अबचाहिं नेपाललाई आफ्नै बाटोमा हिंडाउन चीनले एउटा नयाँ उपाय निकालेको छ- नेपालमा धेरै बाटाहरू बनाइदिने ।

हालै सम्पन्न चिनियाँ राष्ट्रपति सी चिनफिङको नेपाल भ्रमणमा धेरै नै बाटाहरू बनाउने सम्झौता भएको छ । सडक मार्ग, रेल मार्ग, सुरूङ मार्ग, नयाँ-नयाँ नाकामा नयाँ-नयाँ मार्ग । जताततै मार्गै मार्ग । यी जम्मै सम्झौता कार्यान्वयन भए नेपालमा यति धेरै मार्ग बन्नेछन् कि नेपाली जनताले चिनियाँ मार्ग छाडेर अर्को मार्गमा हिंड्ने मौकै पाउने छैनन् । जहाँ हेरे पनि चिनियाँ मार्ग । रेल चढे पनि चिनियाँ मार्ग, सुरूङमा गए पनि चिनियाँ मार्ग, सडकमा आए पनि चिनियाँ मार्ग । चीनले भनी नै सकेको छ, नेपालमा यति धेरै मार्ग बनाउँछौं कि भूपरिवेष्टित नेपाललाई पूरै भूजडित पारिदिनेछौं ।

त्यसपछि नेपाली जनता जता हिंडे पनि चिनियाँ मार्गमै हिंडिरहेका हुनेछन् । तर त्यसपछि पनि एउटा प्रश्नचाहिं बाँकी रहन्छ कि जस्तो लाग्छ । चीनले यति धेरै मार्ग बनाइसकेपछि नेपाली जनता त चिनियाँ मार्गमै हिंड्नुपर्ने हुन्छ । त्यसको विकल्पै छैन । तर नेपाली जनता चिनियाँ मार्गमा हिंडे पनि नेपालचाहिं 'चिनियाँ मार्ग' मा हिंड्ला कि नहिंड्ला ? त्यसको जवाफ कसले दिने ?

# त्रसित अपराधी

देशमा घटित केही नयाँ खाले घटनाले अपराध जगत् पूरै त्रसित बनेको छ । अपराधीको काम अरूलाई त्रसित बनाउनै हो । अब अपराधी आफैं त्रसित बनेका छन् भने अरूको अवस्था के होला ? त्यो त अनुमान मात्रै लगाउन सकिन्छ ।

हिजो चोकमा गुइँठे भेटेको थिएँ । गुइँठे टोल मात्र होइन, पूरा इलाकैमा नामी गुन्डा हो । ऊ घरमा भन्दा बढी खोरमा बसेको हुन्छ । अपराधमा उसको जोडी कोही छैन भन्दा हुन्छ होला । दुनियाँमा कुनै नयाँ अपराध उत्पत्ति भए मात्रै हो, नभए उसले नभ्याएको अपराध अहिले कुनै बाँकी छैन ।

तर हिजो भेट्दा गुइँठेको अनुहार रातोपिरो थियो । मलाई भेट्नेबित्तिकै उसले भन्यो, 'दाइ, यो देशमा के हुन लागेको हँ ?'

मैले सोधैं, 'किन, के भयो ?'

उसले भन्यो, 'तपाईंले सुन्नुभएन ? अहिले बलात्कार, हत्या, हिंसा, तोडफोडजस्तो काम त जम्मै सांसद, सभामुखहरूले गर्न थालेछन् । यो के भएको ?'

मैले अनौठो मान्दै सोधैं, 'हो त गरे । तर यसले तिमीलाई के फरक गर्छ ? तिमीले पनि आखिर गर्ने त त्यही हो ।'

'त्यही त भनेको दाइ,' गुइँठे म नजिक आयो, 'यो जम्मै त हाम्रो काम हो । अब यो काम पनि सभामुख, सांसदजस्ता ठूला मान्छेले गर्न थालेपछि हामीले के गर्ने ? यो त सीधै हाम्रो पेटमा लात हानेको भएन ?'



'हँ ? !' फिंगै पस्न मिल्ने गरी मेरो मुख ह्वांग भयो ।

'अनि भन्नुस् त दाइ, हामीले के गर्ने ? उहाँहरू ठूलो मान्छे । पावर भएको मान्छे । हामीले उहाँहरूसँग प्रतिस्पर्धा गर्न सक्छौं ? हत्या, बलात्कार, कुटपिट, लुटपाट, तोडफोड जम्मै उहाँहरू आफैंले गर्न थालेपछि हामीले चाहिं गर्ने के ? के हामीलाई आफ्नो काम गर्ने अधिकार पनि छैन ?'

गुइँठे एकाएक अधिकारवादीसमेत भएको देखेर म चकित भएँ ।

# फर्गेट एस्टरडे

**अचानक रोशनी शाहीको मोबाइलमा** एम सरको मेसेज आयो, 'फर्गेट एस्टरडे ।'

रोशनी शाहीले एकछिन मेसेज हेरिन् । केही लेखूँ कि जस्तो गरिन् । तर लेखिनन् । पछि के सोच आएछ कुन्नि, मेसेज फकाईन्, 'हाउ कुड आई फर्गेट एस्टरडे ? नो आई कान्ट ।'

तुरुन्तै एम सरको रिप्लाइ आयो, 'बट यू मस्ट । तिमीले बिर्सनैपर्छ ।'

रोशनी शाही झर्किन्, 'कसरी बिर्सिने ? तिमीले बिर्सिन सक्छौ ?'

'सक्छु ।'

'कसरी ?'

'खोइ कसरी थाहा छैन । तर मैले हिजोको सम्पूर्ण कुरा बिर्सिसकेको छु,' एम सरको लामो मेसेज, 'त्यो बिर्सन मलाई कुनै गाह्रो-साह्रो पनि भएन । मजाले बिर्सिदिएको छु ।'

रोशनी शाही झर्किन्, होइन तर्किन् पनि । कसरी बिर्स्यो होला त्यसरी ? आश्चर्य र आक्रोश दुवै घोलिएको ककटेल मेसेज पठाइन्, 'के के बिर्सियौ त तिमीले ?'

एम सरको मेसेज तुरुन्तै फर्कियो, 'हिजोको त सबै कुरा मैले बिर्सिसकेको छु । हिजो हामी जनताको मुक्तिका लागि हतियार बोकेर जंगल घुम्ने गर्थ्यौं, त्यो मैले पूरै बिर्सिसकेको छु । त्यतिबेला जनतासामु अनेक क्रान्तिकारी भाषण गर्नुपर्ने हुन्थ्यो, धेरै गरियो पनि । त्यसरी भाषण गर्दा के-के भनियो, अहिले त्यो जम्मै बिर्सिसकेको छु ।'

मेसेज पढेर रोशनी चकित हुंदै थिइन् । पुनः अर्को मेसेज आयो ।

'हिजो जनयुद्ध गर्दा हाम्रा धेरै क्रान्तिकारीहरू सहिद भए । आज मैले तिनीहरूलाई पनि बिर्सिसकें । म त स्कुल पढाउने शिक्षक हुं । विद्यार्थीलाई लामा-लामा नैतिक पाठ पढाउने गर्थे । त्यो नैतिक पाठ पनि जम्मै बिर्सेको छु । सिद्धान्त, आदर्श, इमानदारी पनि जम्मै बिर्सिदिएको छु । बिर्सन केही गाह्रो छैन । मैले यति धेरै वर्षको कुरा त बिर्सिसकें भने तिमीले जाबो हिजोको कुरा बिर्सिन सक्दिनौ ?'

एम सरको प्रश्नले रोशनी जवाफविहीन बनिन् । के दिने जवाफ ?

[ झटारो ]

# महरा र आफतावहरूलाई जोगाऊ !



लक्ष्मण गाम्नागे

नेकपाका उपल्लो तहका नेता सभामुख कृष्णबहादुर महरामाथि बलात्कारको आरोप लाग्दा पनि पार्टीले खण्डन गरेर प्रेस वक्तव्यसम्म निकालेन । महराजीको सचिवालयले एउटा खेस्रा जारी गरेर उनको आँखामा छारो हाल्ने काम मात्र गर्‍यो । उनका कार्यकर्ताले एउटा जुलुस पनि निकालेनन् । आफ्ना निकटतम सहयोगी नेता महराजीलाई संरक्षण गर्नु त कता, पार्टीका अध्यक्षहरूले राजीनामा पो गराए । गृहमन्त्रीले आफ्ना अन्तरंग मित्रलाई बचाउलान् भनेको, उल्टै पुलिस लगाएर पक्राउ गराए ।

मान्छेको मन हो, चन्चल भइहाल्छ । संयोगले हालसम्म जोगिइरहेका चन्चले महराहरू पार्टीमा अरू कति होलान् ! उनीहरुको पनि मायाको गुप्ती संसारमा यसैगरी पहिरो लड्न थाल्यो भने पार्टीमा मायालु मन भएका नेताहरूको खडेरी पर्न के बेर ! नेकपाले सोच्नुपर्छ । महराजीको केसमा बलात्कार गरेको होइन, प्रयास मात्रै गरेको हो भनेर पीडितले नै बयान सच्याइसकेपछि पार्टीले आफ्ना नेतालाई चोख्याउनेतिर लाग्नुपर्नेमा कारबाही गराएर उनीमाथि घात गरेको छ । आजीवन पार्टीमा लागेर, कति पटक ज्यानकै बाजी लगाएर त्यो तहमा पुगेको नेतालाई आपद् आइलाग्दा उद्धार गर्नुपर्नेमा मुन्टो अन्तै बटारेर नेताहरूले ठूलो धोका दिए । पार्टी र नेताहरूले आफ्ना निकटका अपराधीलाई बचाउने परम्परा कायम गरेनन्, आफ्नो कर्तव्यबाट विचलित भए ।



सरकारले त प्रतिपक्षीहरूको विरोधको सामना गर्ने आँट नभएर बाध्यतावश सभामुखको बचाउ गर्न सकेन होला । प्रमुख प्रतिपक्षचाहिँ किन यति भुत्ते भएको ? आफ्ना शक्तिशाली नेता आफताव आलमको एक दशकभन्दा पुरानो घटना उल्टाएर प्रहरीले अन्यायपूर्वक कारबाही गर्दा पनि किन चुप लागेको ? अब मुद्दा चल्दा कदाचित उनले आफ्ना कार्यकर्तालाई जिउँदै आगोमा हालेर मारेको भन्ने प्रमाणित भयो र जेल गए भने कांग्रेसलाई कत्रो नोक्सान हुन्छ ? आफतावले आखिर पार्टीकै जीतका लागि बम पड्काएका रहेछन् । विस्फोटको पोल खुल्छ भनेर पार्टीकै हितका लागि घाइते भएकालाई जिउँदै जलाएर मारेको भन्ने कुरा छ । जिउँदै मारेका हुन् भने पनि आफ्नै कार्यकर्तालाई मारेका रहेछन् । मारेको दसीप्रमाण पनि मेटाएकै रहेछन् । मार्दा पनि खासै तड्पाएर क्रुर तरिकाले मारेको होइन रहेछ, बेहोस बनाएर इँटाभट्टाको भुंग्रोमा हालेर आत्था पनि भन्न नपाई सिध्याएको अरे । आफ्ना यस्ता कुशल, इमानदार, होसियार र साहसी नेतामाथि दुई तिहाइको दम्भ देखाउँदै सरकारले कारबाही गर्दा पनि प्रमुख प्रतिपक्ष दलले देशव्यापी विरोध प्रदर्शन गरेन । सडकदेखि सदनसम्म हंगामा मच्चाएर भविष्यका लागि भोट बढाउनुको सट्टा कानमा तेल हालेर सुतेर बस्यो ।

नेताहरूले यसरी आफ्ना होनहार नेता-कार्यकर्तालाई भ्रष्टाचार, बलात्कार, हत्या, अपहरणजस्ता सानातिना अपराधमा नजोगाउने हो भने पार्टी कसरी चल्छ ? आगामी चुनावमा पार्टीहरूले त्यस्ता योग्य र साहसी उम्मेदवार कहाँबाट ल्याउँछन् ? त्यसैले, आफ्ना पार्टीका नेता-कार्यकर्ताले जुनसुकै अपराध गरेको भए पनि जोगाउने, लुकाउने, संरक्षण गर्ने परम्परागत संस्कृतिबाट दलहरू विचलित हुनुहुँदैन । नेताहरूले आफ्नो धर्म छाड्नुहुँदैन । युवा कार्यकर्ताले यसरी अल्छी भएर ज्यानमा बोसो जमाउनुहुँदैन । हुतिहारा हुनुहुँदैन । आफ्ना नेता-कार्यकर्तामाथि कुनै पनि अपराधमा पक्राउ गर्न, छानबिन हुन वा कारबाही हुन दिनुहुँदैन । दलहरूभित्र अरू-अरू महराहरू, आफतावहरू प्रकट हुँदै जाँदा र यसरी कारबाही हुँदै जाँदा भोलि पार्टीमा नेताहरू नै सकिए भने देश कसले चलाउँछ ? चेतना भया !




# कुमारीको आशीर्वाद

श्रुति श्रेष्ठ

दसैं, नवमीको मध्यरातसम्म चहलपहल थियो, पाटनको इःबहालस्थित रत्नकर महाविहार परिषद्मा। राती ८ बजेपछि अभिभावकहरू साना नानीसँग भेला हुँदै थिए भने भक्तजन भजनमा व्यस्त थिए । त्यसैले त साढे ६ वर्षीय जीवित देवी मानिने कुमारी निहिराशोभा वज्राचार्य पनि अर्धनिद्रामा भक्तजनलाई आशीर्वाद दिँदै थिइन् ।

हरेक वर्ष दसैँको नवमीमा ललितपुर पाटन मूलचोकस्थित तलेजु मन्दिरमा मूल कुमारीको देवी कालीका रूपमा पूजा गरिन्छ। तलेजु मन्दिरका मूल पुजारी,









कर्मचारीहरू बाजागाजा साथ रत्नकर महाविहारमा कुमारी लिन जान्छन्।

कुमारीसँग ललितपुर ह:वहालका शाक्य तथा वज्राचार्यमध्ये कुमारी छानिने खलकका इहि (बेल विवाह) नगरेका कन्याहरूको पनि संयुक्त पूजा गरिन्छ । पूजामा सहभागी कन्याहरूको नेवारी परम्पराअनुसार गरिने इही गर्नु पर्दैन ।

तलेजु मन्दिर मूल पूजारीद्वारा ह:बहालमै आह्वान पूजा गरेपछि सोही मन्दिरमा लगी मूल कुमारीको पूजा गरिन्छ। अरू कन्याहरूका साथ गणेश एवं भैरवका प्रतीक स्वरूप कुमार बालकको पनि पूजा गरिन्छ। विधिवत् रूपमा पूजा गरेर ठ्याबु (चौरासी व्यञ्जन) खुवाएपछि उक्त पूजा सम्पन्न हुन्छ। ने

# यसरी लिइयो जंगे खम्पा नियन्त्रण

चीनमा तिब्बतको शान्तिपूर्ण एकीकरणपछि सन् १९५९ केही असन्तुष्ट तिब्बतीहरू नेपालमा शरणार्थीका रूपमा ओइरिए । तिब्बती शरणार्थी कोही शान्तिपूर्ण रूपमा नेपालको हिमाली क्षेत्रमा शरण लिन आए । कोही जंगे खम्पा विद्रोही बनेर चीनसँग गुरिल्ला युद्ध गर्न भारत, अमेरिकाबाट तालिम र हतियारसहित नेपालका तिब्बत छुने जिल्ला प्रवेश गरे ।

सुरूमा तिब्बती खम्पा विद्रोहीले चिनियाँ सेनासँग सीमा क्षेत्रमा छापामार युद्ध थाले । गे वाङ्दीको नेतृत्वमा गठन भएको तिब्बती छापामार जंगे खम्पा समूहलाई पश्चिमा राष्ट्र, युरोपेली मुलुक र छिमेकको भारतले मानवीय सहयोगका साथै हतियार पनि उपलब्ध गराएका थिए । विशेषतः पश्चिमा राष्ट्र र भारतबाट युद्धकलामा प्रशिक्षित खम्पालाई नेपालको हिमाली क्षेत्रमा जहाजमार्फत उतारिन्थ्यो ।

तिब्बती खम्पाकै कारण नेपालको हिमाली क्षेत्र अन्तर्राष्ट्रिय शक्तिको रणनीतिक स्थल बन्यो । यसको उदाहरण भारतीय चेक पोस्ट नै थियो । तर खम्पा नियन्त्रणका बेला भारतीय चेकपोस्ट हटिसकेका थिए । जंगे खम्पाले नेपालभित्रै पनि शाही नेपाली सेना, नेपाल प्रहरीका हातहतियार खोसेर आतंक मच्चाउने, लुटपाटजस्ता अराजक गतिविधि गर्न थाले । जंगे खम्पाहरूले सशस्त्र गतिविधि सञ्चालन गर्न मनाङलाई सेल्टर बनाएका थिए ।

चीन सरकारको अनुरोधमा हिमाली क्षेत्रमा आश्रय स्थल बनाएर सशस्त्र गतिविधि गर्दै आएका जंगे खम्पालाई नियन्त्रणमा लिन नेपाल सरकारले तदारूकता देखायो । तिब्बती शरणार्थी र सशस्त्र खम्पालाई मानवीय सहायता उपलब्ध गराउने पश्चिमा शक्ति र भारतीय संस्थामाथि सरकारले सूक्ष्म निगरानी बढाउने घोषणा तत्कालीन प्रधानमन्त्री कीर्तिनिधि विष्ट (०२५-०३०) बाट भयो ।

खम्पा विद्रोहीलाई चीनसँग लड्न हतियार बोकेर नेपालको उत्तरी क्षेत्र आउने भारतीय जहाजसमेतलाई उडानमा प्रतिबन्ध लगाइयो । तिब्बती शरणार्थीलाई मानवीय सहायता उपलब्ध गराउन अमेरिकाले काठमाडौं, स्युचाटारमा खोलेको विमानस्थलसमेत बन्द गराइयो । मानवीय सहायता सामग्री बोकेर हिमाली क्षेत्रमा उड्ने जहाजमाथि कडा निगरानी थालियो ।

खम्पा विद्रोह नियन्त्रणका लागि ०२८ मा सरकारले हिमाली क्षेत्रका केही भागमा विदेशीलाई प्रवेश निषेध गर्‍यो । यसो गर्नुको उद्देश्यचाहिँ तिब्बती जंगे खम्पा विद्रोहीका गतिविधि नियन्त्रणमा लिनु थियो । खम्पा विद्रोह रोकिनुको


तामला उक्याब



साटो झन्-झन् बढ्दो थियो ।

मनाङ, मुस्ताङलगायतका जिल्लामा सशस्त्र जंगे खम्पाहरूको नियन्त्रण थियो । बाटो आउजाउ गर्ने स्थानीयलाई समेत तिनले खानतलासी गर्थे । तिब्बत छुने जिल्लामा सरकारको उपस्थिति बढाउन दुर्गम विकास समितिजस्ता संस्था स्थापना गरिए पनि त्यहाँ सुरक्षा संयन्त्रको उपस्थिति न्यून थियो । तिब्बत छुने जिल्लाका प्रशासन र नेपाल प्रहरी शाही नेपाली सेनाको संयुक्त कमान्डमा रहने गरी अपरेसन थालियो ।

९ वटा स्थल सैनिक बटालियन गणसहितको शाही नेपाली सेना हेलिकोप्टरसहित सशस्त्र जंगे खम्पाहरूलाई नियन्त्रणमा लिन मुस्ताङ पुग्यो । मुस्ताङ पुगेका सैनिक अधिकारीले जंगे खम्पालाई हातहतियार बिसाएर आत्मसमर्पण गर्न समयसीमासमेत तोके । सेनाको अगुवाइमा तिब्बती खम्पा नियन्त्रणको प्रयास थालिएसँगै केही छापामार पक्रिए, केही भागेर भारत प्रवेश गरे र केहीले आत्मसमर्पण गरे ।

जंगे खम्पाका कमान्डर वाङ्दीले शाही नेपाली सेनासमक्ष आत्मसमर्पण गरेर मुस्ताङ छाडे । पछि ०२८ सालमा प्रहरी चौकी आक्रमणमा संलग्न हुँदै गर्दा उनलाई दार्चुलामा सेनाले मारिदिएको थियो । कमान्डरको मृत्युपछि जंगे खम्पाहरूका सशस्त्र गतिविधि सेलाउँदै गए ।

हातहतियार बिसाउनेलाई नेपाली नागरिकता दिइने आश्वासन त्यतिबेलाको सरकारले दिएको थियो । नेता मारिएपछि बचेखुचेका छापामारले नेपाल सरकारसँग हतियार बिसाए । आत्मसमर्पण गरेकाहरूलाई निःशस्त्र बनाइयो र शरणार्थीकै रूपमा नेपालमा बस्न इजाजत दिइयो ।

खम्पा विद्रोह नियन्त्रणमा आएपछि हिमाली क्षेत्रलाई आश्रय स्थल बनाइरहेका तिब्बती शरणार्थीलाई नेपाल-चीन छुने सबै दोसाँधबाट हटाइयो । तिब्बत छुने सीमा क्षेत्रमा रहेका केही तिब्बती शरणार्थीलाई ०३२ सालमा पोखरा सारियो । काठमाडौंको स्वयम्भू, बौद्धलगायत स्थानमा पनि शरणार्थीलाई सारियो । हिमाली क्षेत्रमा शरण दिँदा पुनः चीनविरोधी गतिविधिमा संलग्न हुने आशंका हटाउन यसो गरिएको हो ।

दुर्गम विकास समितिको जागिरे भए पनि खम्पा विद्रोह नियन्त्रणका बेला गृह पञ्चायत मन्त्रालयमा तिब्बती शरणार्थी व्यवस्थापनको जिम्मामा रहेर काम गर्ने अवसर मलाई जुटेको थियो ।

**प्रस्तुति : गोकुल अर्याल**

# वनको ८२ बिघा कब्जा

## शंकरनगर सामुदायिक वनका उपभोक्ता र भूमाफियाबीच बस्ने र लखेट्ने दोहोरी

अमृता अनमोल

व्यक्तिको नाममा दर्ता शंकरनगर सामुदायिक वनको क्षेत्र

**अमृता अनमोल**/बुटवल

प्रदेश राजधानी बुटवलसँगै जोडिएको तिलोत्तमा नगरपालिकामा छ, हराभरा शंकरनगर सामुदायिक वन । प्रदेश ५ का उद्योग पर्यटन, वन तथा वातावरणमन्त्री लीला गिरी र पटक-पटक मन्त्री भएका कांग्रेस नेता तथा प्रमुख सचेतक बालकृष्ण खाँडसमेत उपभोक्ता रहेको सामुदायिक वन भने भूमाफियाको कब्जामा छ । यहाँको ८२ बिघा जग्गा ३० वर्षअघिदेखि व्यक्तिको नाममा छ। हाल उक्त जग्गामा ७२ जनाको स्वामित्व छ ।

सरकारी पदाधिकारीको मिलेमतोमै स्थानीय नारायण सापकोटाको अगुवाइमा घना जंगल व्यक्तिका नाममा गएको हो । त्यसयता सामुदायिक वनका उपभोक्ता र भूमाफियाबीच बस्ने र लखेट्ने दोहोरी चलेको छ तर वनको जग्गा फिर्ता हुन सकेको छैन । जिल्ला वन कार्यालयले दर्ता खारेज गर्न गरेको फैसला र अख्तियार दुरुपयोग अनुसन्धान आयोगले कारबाही गर्न दिएको निर्देशन कार्यान्वयनमा नआएको सामुदायिक वनका अध्यक्ष राम गिरी बताउँछन् । "भूमाफियाको जालो शंकरनगरदेखि काठमाडौंसम्म नै रहेछ । माफियाले सामुदायिक वनमाथि नै मुद्दा हालेका छन्," उनी भन्छन्, "०४८ सालदेखि अड्डाअदालत धाइरहेका छौं । तर वनको जग्गा फिर्ता ल्याउन सकेका छैनौं ।"

०५२ सालमा अख्तियारले दिएको निर्देशनअनुसार ६ वर्षअघि उक्त जग्गा दर्ता खारेज गर्ने फैसला जिल्ला वनले गरेको थियो। त्यसको मुद्दा जिल्ला वन कार्यालयमा तामेलीमा छ। भूमाफिया फैसलाविरुद्ध अदालत गएका छन्। पुनरावेदन र सर्वोच्च घुम्दै मुद्दा अहिले उच्च अदालत बुटवलमा आएको छ ।

साविक शंकरनगर-१ र करहिया गाविस-८ मा रहेको क्षेत्र अहिले तिलोत्तमा नगरपालिका-१ र ८ मा छ, जुन पर्यटकीय क्षेत्र वनबाटिकाबाट पूर्वपट्टि करहिया जाने सडक छेउ पर्छ । त्यहाँ हाल साल, सिसौलगायत रूख छन् । उक्त जग्गा हाल प्रदेशस्तरीय मेडिकल कलेज बनाउन प्रस्ताव गरिएको छ। प्रस्तावित जग्गा अर्कैको नाममा देखिएपछि कलेज निर्माणको कामसमेत अलमलमा छ । "विवादित जग्गाको फिल्ड बुक, नक्सा, स्रेस्तासमेत कहीँ-कतै कानुनबमोजिम दर्ता भएको रेकर्ड अभिलेख छैन। जग्गाको तिरोभरो कोही-कसैबाट भएको छैन," स्थानीय उपभोक्ता तथा मुद्दाको सहजीकरण गरेका अधिवक्ता खुमकान्त पौडेल भन्छन्, "टेबलमा बसेर जग्गा लिने-दिनेले सरासर झुट काम गरेकामा पनि फिर्ता ल्याउन महाभारतको युद्धजस्तै भएको छ ।"

### कसरी भयो किर्ते

०४६ सालमा तत्कालीन सरकारले रूपन्देही कपिलवस्तु उच्चस्तरीय वन सुदृढीकरण आयोग गठन गरेको थियो । त्यसका अध्यक्ष यज्ञबहादुर बुढाथोकीको अगुवाइमा वनको जग्गा सुकुम्बासीका नाममा व्यक्तिलाई दिइएको हो। १७ माघ ०४६ को कागजातमा स्थानीय १ सय ४६ जनालाई जग्गाको लालपुर्जा दिन निर्णय गरेको उल्लेख छ । जग्गाको फिल्ड नक्सा भने त्यसअगाडिको छ ।

टोली प्रमुख माताप्रसाद त्रिपाठी र अमिन केदारप्रसाद ढुंगानाले फिल्ड नक्सा बनाउने काम ३-८ माघसम्म गरेका थिए। कागजातले

त्यसबेला मालपोत र नापी कार्यालयका कर्मचारीसमेत किर्ते काममा प्रत्यक्ष संलग्न रहेको पुष्टि हुन्छ । जबकि क्षेत्र पूर्वपञ्चायत वन र पञ्चायत संरक्षित वनलाई २८ फागुन ०४५ मा उपभोक्तालाई हस्तान्तरण गरिएको थियो । "स्वामित्व लिएसँगै भूमाफियाले जग्गा नापजाँच गर्न कर्मचारी खटाए । केही व्यक्ति आएर बस्ती बसाले," तत्कालीन सामुदायिक वनका अध्यक्ष प्रेमबहादुर भण्डारी भन्छन्, "सबै जुटेर हटायौँ तर जग्गाको स्वामित्व फर्काउन सकेनौँ ।"

बहुदलीय व्यवस्था आएसँगै सुकुम्बासी समस्या समाधान आयोग बन्यो । त्यसका रूपन्देही अध्यक्ष एकराज भाट थिए, जो पहिलो संविधानसभा चुनावमा चितवनबाट कांग्रेस समानुपातिक सांसद बने । उनी बुटवल बेगम किशोर पुनको घरमा बस्थे । पुन प्रशासकलाई फकाउन र कुटिल काम गर्न माहिर थिए । पशुपालकसमेत रहेका नारायणले उनको घरमा दूध पुऱ्याउने गर्थे । दूध लैजाँदै गर्दा बेगमसहित भाटलाई प्रलोभनमा पार्न सफल भए । उनीहरूको मिलेमतोमा मालपोतका कर्मचारीलाई प्रलोभनमा पारे । लगत्तै आयोगमार्फत एकराजले १६ कात्तिक ०५१ मा रूपन्देही कपिलवस्तु वन सुदृढीकरण आयोग बुटवलको १७ माघ ०४६ को निर्णयबमोजिम जग्गा दर्ता गर्ने एकल निर्णय गरे । 'यसमध्येका ७२ जनाको फिल्ड नक्सा बुक, वितरण भएको पुर्जाका स्रेस्ता अनुमोदन गर्ने निर्णयसमेत गरेको छु,' स्रेस्तामा छ ।

## कानुनी लडाइँ

०५२ वैशाखमा भूमाफियाहरू जुटे र तिरो भराउन मालपोत गए । उक्त जग्गा प्रमाणित भएको भन्दै सामुदायिक वन र गाविसमा समेत पुर्जा देखाउँदै हिँड्न थाले । यसपछि सामुदायिक वन र शंकरनगर गाविसले ११ जेठ ०५२ मा नारायणप्रसाद सापकोटा, उदम गुरुङदेखि सुमन थापासम्मका १ सय ४६ जनाले जग्गा दर्ता पुर्जा देखाउँदै हिँडेकाले उनीहरूको दर्ता खारेज गर्न भनी जिल्ला प्रशासन कार्यालयमा उजुरी दिए । शंकरनगर गाविस अध्यक्ष हालका प्रदेशको उद्योग पर्यटन वन तथा वातावरणमन्त्री गिरी थिए । 'वनको जग्गामा व्यक्तिले ०३८ सालदेखि भोगचलन गरेको भन्ने गलत हो । तर उनीहरूका हातमा लालपुर्जा छ,' उजुरीमा उल्लेख छ, 'सरकारी निकायबाटै अनुमोदन र प्रमाणित भएको छ तर मालपोत कार्यालयमा मोठ र स्रेस्ता छैन । यसैले जग्गा फिर्ता गरिपाऊँ ।'

प्रशासनले कागजात वनमा पठायो तर जग्गा फर्काउन चासो दिइएन । उपभोक्ता समिति २० पुस ०५२ मा अख्तियारमा गए । शंकरनगर वनका तर्फबाट अध्यक्ष भण्डारीले वन किर्ते गर्नेलाई कारबाही र जग्गा दर्ता बदर गर्न माग गरे । अख्तियारले वन कार्यालय, मालपोत, नापीका प्रमाण जम्मा गऱ्यो । जग्गा दिने निर्णय गर्ने यज्ञराज र निर्णय कार्यान्वयनमा लगाउने एकराजसमेतलाई सोधपुछ गऱ्यो । पछि १२ जेठ ०५५ मा दुवै आयोगले गरेका काम झुटो भएको भनी वन ऐनसम्बन्धी दर्ता बदर गर्न जिल्ला वन कार्यालयलाई निर्देशन दियो । ठगीको मुद्दा चलाई कारबाही गर्न जिल्ला प्रहरी कार्यालयमा निर्देशन पठायो । तर वन र प्रहरीले कुनै प्रक्रिया थालेनन् ।

शान्ति प्रक्रियापछि भूमाफियाका तर्फबाट नारायणका आफन्त गोविन्द सापकोटासमेतले अगुवाइ थाले । शंकरनगरमा तत्कालीन माओवादी युवा संगठन वाईसीएलको दबदबा थियो । त्यही शक्तिलाई भूमाफियाले आफ्नो पक्षमा पारेर जंगल फाँडेर बस्न थाले । स्थानीय र माफियाबीच लखेटालखेट चल्यो । यसबाट सामुदायिक वनमा ठूलो धक्का लाग्यो । पटक-पटक मालपोत र नापीमा गएर रोक्न खोजे तर उपाय लागेन । यसपछि २ र ३ असार ०७० मा कांग्रेस नेता खाँड र तत्कालीन एमाले नेता गिरीसहित सामुदायिक वनको टोली जिल्ला वन कार्यालयमा २ दिन धर्ना बस्यो । "यसले वनलाई अख्तियारको निर्णय कार्यान्वयन गर्न दबाब भयो," तत्कालीन वन अधिकृत रुद्र ज्ञवाली भन्छन्, "अदृश्य दबाबलाई चिरेर हामी अनुसन्धानमा लाग्यौँ ।"

लामो समय अल्झिएको मुद्दालाई जिल्ला वनले २८ असार ०७० मा फैसला गऱ्यो । त्यसबेला जिल्ला वन अधिकारी दीपक ज्ञवाली थिए । उनको अगुवाइमा भएको फैसलाको पहिलो बुँदामा वन ऐन, ०४९ को दफा १६ को उपदफा १३ बमोजिम नारायण सापकोटादेखि नरबहादुर गाहासम्मका ७२ जनाको नाममा रहेको जग्गा दर्ता बदर गरी राष्ट्रिय वन कायम गर्न र जग्गाको लगत कट्टा गर्न सम्बन्धित जिल्ला मालपोत कार्यालय रूपन्देही र नापी कार्यालयमा लेखी पठाउने उल्लेख छ ।

दोस्रोमा उक्त दफाको उपदफा १ अनुसार वन कसुर गरेकाले वन क्षेत्रको दर्ता गर्ने-गराउने काममा संलग्न नारायणप्रसादसमेतका हकमा उक्त दफा ५० को उपदफा २ बमोजिम सजाय हुने अवस्था विद्यमान रहेकाले यस विषयमा आवश्यक जाँचबुझ गरी मुद्दा दायर गर्न साविक शीतलनगर इलाका वन कार्यालयमा लेखी पठाउने भनिएको छ । यसअन्तर्गत कसुर गर्ने व्यक्ति वा सरकारी कर्मचारीलाई १० हजार रुपैयाँ जरिवाना वा २ वर्षसम्म कैद वा दुवै सजाय हुन सक्ने व्यवस्था छ । त्यसको निर्णय जिल्ला वन अधिकृतले गर्न सक्छ ।

कुरा यत्तिमा सकिएन, जग्गा किर्ते गर्नेहरू वनको फैसलाविरुद्ध न्यायालय गए । नारायणसहितका व्यक्तिले साविक पुनरावेदन अदालत बुटवलमा ३० असार ०७० मा मुद्दा हाले । पुनरावेदनले ६ पुस ०७२ मा प्रतिवादीलाई रोहबरमा नराखी एकलौटी निर्णय गरेको भन्दै पुनः प्रक्रिया पुऱ्याएर फैसला गर्न साविक जिल्ला वन कार्यालयमा मिसिल फिर्ता गऱ्यो । वन मुद्दा फौजदारी हो, जसमा वारेस लाग्दैन । तर अदालतले कसुर लागेका व्यक्तिलाई तारेख तोकी जिल्ला वन कार्यालयमा पठाएको थियो । "प्रतिवादी आफू गएनन् । वारेस लिन पठाए । वनले वारेस स्वीकारेन र सट्टामा प्रतिवादी स्वयं तारेखमा उपस्थित हुनुपर्ने दाबी गऱ्यौँ,' हाल डिभिजन वन कार्यालय रूपन्देहीका प्रमुख इन्द्रप्रसाद पछाई भन्छन्, "यसपछि पुनरावेदन अदालतको फैसला चित्त नबुझेको भन्दै सर्वोच्च अदालतमा गए ।"

सर्वोच्चले २६ असारमा उक्त मिसिल पुनः उच्च अदालत बुटवलमा पठाएको छ । त्यसमा उक्त जग्गा आवादी या वन क्षेत्र कुन हो, यकिनपछि फैसला गर्न मुद्दाका पक्ष-विपक्षलाई तारेख तोकिएको छ । "हामीले राष्ट्रिय वन लिएर संरक्षण गर्न खोजेका हौँ," अध्यक्ष गिरी भन्छन्, "केही व्यक्तिले गर्दा अड्डा-अदालत मुद्दा-मामिलामा साह्रै दुःख पायौँ ।"

वनको पक्षमा जग्गा ल्याउन पहल गरेका हालका प्रदेश मन्त्री लीला गिरी कानुनी ढिलाइ र झन्झटले जग्गा फिर्ता गराउन नसकेको बताउँछन् । "राजनीतिक र सामाजिक अभियान सुरु गर्न र सक्न सहज रहेछ," उनी भन्छन्, "कानुनका अनेक हांगाबिंगा समाउने भूमाफियासँग लड्न गाह्रो रहेछ ।" प्रदेशका अन्य वनमा समेत यस्ता धेरै मुद्दा छन् । ने

# पुरानै धङधङीमा बालविवाह

## प्रहरी प्रशासन तथा सामाजिक संघसंस्थाको अभियान निष्प्रभावी



**भरत जर्घामगर**/सिरहा

धनगढीमाई नगरपालिका-१३ की १४ वर्षीया किशोरी सविताकुमारी कामतीको ११ माघ ०७५ मा हुनै लागेको विवाह इलाका प्रहरी कार्यालय लहानको सक्रियतामा रोकियो । सविताको विवाह सुखीपुर नगरपालिका-८ का जीतेन्द्रसँग तय गरिएको थियो ।

यस्तै, लहान नगरपालिका-२४ की १४ वर्षीया सियाकुमारी कामतीको गत १६ वैशाखमा बिहे हुनै लाग्दा रोकियो भने सिरहा नगरपालिका-१० की १६ वर्षीया ताराकुमारी महराको गत १३ वैशाखमा लगनगाँठो कसिनै लाग्दा प्रहरी प्रशासनले हस्तक्षेप गर्‍यो ।

### डोमको नियति

बालविवाहविरुद्धको अभियानमा अधिकारकर्मी र प्रहरीको सक्रियता बाक्लिए पनि तराईका जिल्लामा यस्तो विवाह रोकिनुको साटो अझ बढ्दो छ । मधेसका दलित डोम समुदायमा बालविवाह प्रचलन कायमै छ। तराइ मधेसको समाजमा छोरीका लागि पर्याप्त दाइजो दिनुपर्ने बाध्यताका कारण पनि अभिभावकले किशोरी उमेरमै विवाह गरिदिन्छन् । छोरी जति नै पढे पनि दाइजो पर्याप्त मात्रामा लिन्-दिनुपर्छ भन्ने मान्यता र दाइजो नदिए छोरीले यातना, हिंसा भोग्नुपर्ला भन्ने मानसिकताका कारण बालविवाहले बढावा पाएको अधिकारकर्मीको भनाइ छ ।

प्रहरी तथ्यांकले पनि तराईका जिल्लामा बालविवाह क्रम बढेको देखाउँछ। प्रदेश २ प्रहरी कार्यालय जनकपुरको तथ्यांकअनुसार ०७३/७४ मा सिरहामा १, महोत्तरीमा ३, बारा, रौतहट र धनुषामा १-१ बालविवाहका घटना भए । त्यसैगरी ०७४/७५ मा पर्सामा ४, सप्तरीमा २, महोत्तरी, धनुषा र सिरहामा १-१ गरी जम्मा ७ बालविवाह भए। यो क्रम बढेर ०७५/७६ मा ती जिल्लामा २७ बालविवाह भए। त्यसमध्ये सबैभन्दा बढी सिरहामा १०, धनुषामा ६, महोत्तरीमा ४, बारा, सप्तरीमा २-२, पर्सा, रौतहट र सर्लाहीमा १-१ बालविवाहका घटना भए ।

प्रदेश प्रहरी कार्यालय जनकपुरका प्रवक्ता डीएसपी ज्ञानकुमार महतो तराईका जिल्लामा बालविवाह क्रम बढेको बताउँछन् । "पहिला केटीको उमेर १८ वर्ष पुगेपछि विवाह गर्न सकिन्थ्यो तर अहिलेको नयाँ ऐनले २० वर्ष तोकेको छ," डीएसपी महतो भन्छन्, "पुरानै सोचाइका कारण पनि बालविवाह बढेको हो ।" बालविवाह रोक्न प्रहरी प्रशासन तथा सामाजिक संघ-संस्थाहरूले अभियान चलाइरहे पनि नियन्त्रण गर्न नसकिएकाले अभिभावक नै सजग हुनुपर्ने उनको तर्क छ ।

### माइन्जन र पुरोहितको साथ

शारीरिक एवं मानसिक रूपमा सबल नभएसम्म विवाहमा हतारो नगर्न र कानुनी रूपमा पनि दण्डनीय भएको भन्दै सिरहाका जातीय माइन्जन र पुरोहितहरू एकै थलोमा भेला भएर बालविवाहविरुद्धको अभियानमा सक्रिय भएका छन्। जिल्लाको धनगढीमाई र लहान नगरपालिकाका जातीय माइन्जन र पुरोहितको संयुक्त भेलाले थारु समुदायका माइन्जन दुर्गाप्रसाद चौधरीको संयोजकत्वमा २१ सदस्यीय बालविवाह तथा दाइजोविरुद्ध जातीय माइन्जन र पुरोहित निगरानी समिति गठन गरिएको छ।

उनीहरूले बालविवाह तथा दहेज कुप्रथा अन्त्य गर्न सामूहिक लिखित प्रतिबद्धता जनाउँदै १६ बुँदे घोषणापत्र जारी गरेका छन्। निगरानी समितिले कानुनले किटान गरेको २० वर्ष उमेर नपुगेका केटाकेटीको विवाहमा कुनै पनि पण्डित, पुरोहितले पुरेत्याइँ नगर्ने र माइन्जनहरूले भोजभतेरका लागि निम्तो बहिष्कार गर्ने घोषणा गरेको छ । समितिका सदस्यहरूले आफ्ना जातीय समुदायका अभिभावकलाई बालविवाह कानुनी रूपमा दण्डनीय हुनुका साथै शारीरिक र मानसिक रूपमा दुर्बल हुने अभियान चलाउने प्रतिबद्धतासमेत जनाएका छन् ।

विवाहमा पुरोहितले विवाह कर्म चलाउँछन् भने जातीय माइन्जनले भोजभतेर र निमन्त्रणालगायतको मुख्य जिम्मेवारी वहन गर्छन्। जातीय माइन्जनले नै कति जनालाई भोज खुवाउने र दाइजो लेनदेन विषयबारे पनि जातीय सभा र भोजमा चर्चा चलाउँछन् ।

अभियानमा सक्रिय लहान



भरत जर्घामगर

^ सिरहाका जातीय माइन्जन र पण्डित एकै थलो भेला भएर बालविवाह तथा दाइजो प्रथा अन्त्य गर्न सामूहिक लिखित प्रतिबद्धता जनाउँदै

नगरपालिका-२४ का ८० वर्षीय पण्डित राजेन्द्र झाले उमेरभरि धेरै बालबालिकाको विवाह कर्म चलाए पनि त्यो गलत गरेको स्वीकार्दै अब २० वर्ष नपुगी विवाह गर्नुहुन्न भन्ने अभियानमा सक्रिय हुने प्रतिबद्धतासमेत जनाए। राजेन्द्रका बाजे मनु झा र बुबा बहुरी पुरोहित गर्थे। उनीहरूको शेषपछि राजेन्द्रले पनि पुरेत्याइँ कर्म धानेका छन्।

मुलुकी देवानी (संहिता) ऐन, ०७४ ले केटाकेटीको विवाह गर्ने उमेर २० वर्ष तोकेको छ। २० वर्ष नपुगी विवाह गरे कसुर गर्ने व्यक्तिलाई तीन वर्षसम्म कैद र ३० हजार रुपैयाँसम्म जरिवाना हुने व्यवस्था ऐनमा छ। सोही ऐनमा मन्जुरीबिना विवाह गर्न नहुने प्रावधान छ। यदि कसैले गरे वा गराए विवाह स्वतः बदर हुने र त्यस्तो विवाह गर्ने-गराउनेलाई दुई वर्ष कैद र २० हजार जरिवाना तोकिएको छ।

"पहिला पनि मुलुकी ऐन थियो। बुवा भन्नुहुन्थ्यो- त्यतिखेर विवाहका लागि कन्याको न्यूनतम उमेर ५ वर्ष र ०२० सालको मुलुकी ऐनमा विवाह गर्न स्त्रीको १४ र पुरुषको १८ वर्ष उमेर तोकिएको थियो," पुरोहित राजेन्द्र भन्छन्, "तर अहिले कानुनले विवाहको उमेर २० वर्ष तोकिसकेको हेक्का भएन, माइन्जन र पण्डित भेलामा जानकारी भएपछि अब बालविवाह रोक्न लागिपरेको छु।" पुरोहितहरूमा पनि पुरानै मानसिकताका कारण बालविवाह रोकिन नसकेको र पण्डितले कर्म नचलाएपछि स्वतः रोकिने भएकाले अभियानमा सक्रिय भएको उनले सुनाए।

६५ वसन्त पार गरेका दुःखीराम दलित चमार समुदायका पुरोहित हुन्। चमार समुदायको जन्मदेखि विवाह, अष्टजाम, पञ्चदान, घरबासलगायत पूजा संस्कार, कर्म उनैले चलाउँछन्। सिरहा गणेशपुरका उनले एक गाउँ मात्रै होइन, चमार समुदायको बसोबास रहेको सीमावर्ती क्षेत्र नरगी, बडहरी, मौवाही, पत्थरगाढादेखि जिल्लाको उत्तरवर्ती मलहनवा, सीमलटोकीलगायत २२ गाउँमा पुरेत्याइँ गर्छन्। उनको अगुवाइ नभएसम्म ती गाउँमा राम (चमार) समुदायको संस्कार कर्म चल्दैन।

मामा मंगल दासबाट ज्योतिष र पुरोहित ज्ञान आर्जन गरेका दुःखीले ४० वर्ष पुरेत्याइँका क्रममा सयौं जोडीको विवाह कर्म चलाइसकेका छन्। तर उनले भेलामा पहिलोपल्ट बालविवाह गर्नुहुन्न भन्ने जानकारी पाए। "४० वर्षसम्म पुरेत्याइँ गरे हुँला। पहिला केटाकेटीको उमेर २० वर्ष पुग्नुपर्छ भन्ने थिएन," पण्डित दुःखी भन्छन्, "हुर्केका केटाकेटी बिहे गर्ने चलन थियो। ४० वर्षपछि पहिलोपल्ट २० वर्ष उमेर नपुगेकालाई बालविवाह भनिँदो रहेछ। यो उमेरमा आएर बल्ल थाहा पाएँ।"

त्यसो त, दुःखीलाई आफ्नै विवाह भएकोसमेत थाहा छैन। केटाकेटी छँदै उनका बुबा सुनरले लहान-६ की रेवनीसँग जोडी बाँधिदिएका थिए। ३ कक्षा पढ्दै गरेका बालक छोरा श्याम र विनोदको विवाह कर्म उनी आफैँले चलाइदिए। छोरी राम सुनैरको पनि बालखैमा विवाह गरिदिए। "आफ्ना जातिका अरूका त कति हो ? कत्तिको बालविवाह कर्म चलाएँ, गनिसाध्य छैन," भन्छन्, "हाम्रो जातिमा बालविवाह गर्ने चलनै थियो। त्यही कर्मलाई निरन्तरता दिएँ।"

दलित जनकल्याण युवा क्लबले जातीय पण्डित र माइन्जनलाई भेला गरेर बालविवाह कानुनले वर्जित गरेको सम्बन्धमा पटक-पटक प्रशिक्षण चलाएको थियो। क्लबका सदस्यले बालविवाह गर्नुभन्दा छोराछोरीलाई शिक्षा दिन हतारो गर्नुपर्ने सुझाव दिएका थिए। उनीहरूले आफ्ना जातीय समुदायका घरघर पुगेर 'बिहेबारी २० वर्षपारि' जस्ता सचेतना र कानुनी प्रबन्धबारे अभिभावकलाई सुझाउने संकल्प गरेका थिए।

समाज परिवर्तनमा जातीय पुरोहित र माइन्जनहरूको अभियानले सघाउ पुग्ने हुँदा ती जातीय समुदायम वर्षौंदेखि चल्दै आएको बालविवाह रोकथाममा सहयोग पुग्ने दलित अधिकारकर्मी एवं क्लब अध्यक्ष विनोद बिसुन्के बताउँछन्। बालविवाह तथा दाइजोविरुद्ध जातीय पुरोहित र माइन्जन निगरानी समिति संयोजक दुर्गाप्रसाद चौधरी भन्छन्,"उमेर नपुगेका केटाकेटीको बिहे कर्म चलाउँदैनौं, भोजभतेरमा खर्च गराउँदैनौं।"

अधिकारकर्मी राजकुमार राउत कुर्मीका अनुसार विसं १९१० को मुलुकी ऐनमा पनि विवाहका लागि केटीको न्यूनतम उमेर ५ वर्ष तोकिएको, ०२० को मुलुकी ऐनमा विवाह गर्न केटीको १४ र केटाको १८ वर्षको उमेर तोकिएको थियो। तर अहिले कानुनले विवाह उमेर २० वर्ष तोकिसक्दा पनि पुरानै मानसिकताका कारण बालविवाह रोकिन नसकेको कुर्मीको अनुभव छ। ने

गोकर्ण गौतम

# 'मेरो जीवन सकिएको छैन'

## एसिड आक्रमणपीडित मुस्कान खातुनको अठोट

सबेरै ५ बजे उठिन्, नुहाइन्, नमाज पढिन्, खाजा खाइन्, ड्रेस लगाइन् र झोला भिरेर घरबाट निस्किन् ।

वीरगन्ज छपकैया-२ की मुस्कान खातुनलाई स्कुल पुग्न हतार थियो, २० भदौमा । तर आधी बाटोमै उनको यात्रा रोकियो । स्कुल होइन, अस्पताल पुगिन् । कीर्तिपुरस्थित बर्न मोडल अस्पतालमा ४२ रात बिताइसकिन् । चिकित्सक भन्दै छन्, अझ एक-डेढ महिना अस्पतालमै बस्नुपर्छ । २९ असोजमा शैय्याबाट मुस्कानले *नेपाल*सँग भनिन्, "तर मलाई जति छिटो स्कुल जान मन छ ।"

१४ वर्षकी मुस्कान ९ कक्षामा अध्ययनरत छिन् । नामजस्तै हरदम मुस्कुराउँथिन् तर अहिले खुलेर हाँस्न सक्दिनन्, अचाक्ली पीडा हुन्छ । अनुहारको दायाँ भाग पूरै डढेको छ, दुवै हातको हालत उस्तै । फूलजस्तै कोमल मुस्कानको शरीरमा एसिड जो प्रहार भयो ।

उनले एसिडको नाम सुनेकी थिइन् तर यसले आफ्नै जीवन बर्बाद पार्ने अहँ ! कल्पनै थिएन । मान्छेलाई हानिन्छ भन्ने पनि हेक्का थिएन । न उनको कुनै गल्ती, न त दुर्घटना । तर यत्तिका दिन असीमित शारीरिक दुखाइ र मानसिक छटपटी । अझ कत्ति बाँकी छ !

एसिड प्रहारको त्यो आततायी क्षण सम्झँदा मुस्कानका आँखामा आँसु होइन, आक्रोश भरिन्छ ।

स्कुल पुग्न केही मिनेट बाँकी थियो, अलि अघि र पछि साथीहरू थिए, बीचमा मुस्कान एक्लै थिइन् । बाटो छेउ उनलाई ढुकिरहेका रहेछन्, सम्साद आलम । मुस्कानलाई मन पराउँछु भन्दै जिस्काएर दुःख दिने माजिद मियाका लंगौटिया थिए, सम्साद । त्यसैले उनलाई देख्नासाथ मुस्कानको ढुकढुकी हल्का बढ्यो, तैपनि नदेखेझैँ फटाफट हिँडिरहिन् । सम्सादले जिस्काउँदै सोधे, 'कता हिँडेकी ?' यसो हेरिन्, एउटा हातमा ढुंगा थियो, अर्को हातमा सिसाको जग ।

डर बढ्यो तर नडराए जसरी जवाफ दिइन्, 'ड्रेस देखेनौँ, स्कुल जान लाग्या नि ।' त्यसपछि सम्सादले 'लाउ पानी खाऊ' भन्दै जग थमाउन खोजे, मुस्कानले मानिनन् । चार पाइला अगाडि बढिसकेकी थिइन् । सम्सादले बोलाए, 'मुस्कान यता हेर त ।' उनी ठ्याक्क पछाडि फर्किन्, सम्सादले जगको तरल पदार्थ उनको अनुहारमा फालिहाले । त्यही बेला माजिदलाई पनि त्यहीँ देखिन् । उनी छेवैमा लुकेर बसेका रहेछन् ।

सम्सादले भनेजस्तो जगमा पानी नभई एसिड थियो । मुस्कानको उपचारमा दिनरात खटिरहेका बुबा रसुल अन्सारीका अनुसार एसिड खुवाएर र ढुंगाले हान्ने योजनामा थिए, सम्साद र माजिद । खान नमानेपछि माजिदकै इसारामा सम्सादले अनुहारमा हुत्याइदिए ।



भाग्यवश ! त्यसरी जग आफूतिर ताक्दा डराउँदै मुस्कानले दुई हातले अनुहार छोपिन्, त्यसैले एसिडले उनको अनुहार पूरै जलेन, आँखा पनि बच्यो, अनुहारको दायाँ भागदेखि छातीसम्म जल्यो । तर त्यतिबेला मुस्कानलाई एसिड हो भन्ने लागेन, भकभक उमालेको पानीजस्तो लाग्यो । किनभने एसिडले सुरुमै जलाइहाल्दैन, बिस्तारै जल्दै र दुखाइ बढ्दै जान्छ । एसिड हान्नासाथ उनीहरू भागिहाले, वरपर अरू मान्छे जम्मा भए, मुस्कानले बुबाको फोन नम्बर दिइन्, त्यसपछि बेहोस भइन् ।

होस आउँदा अस्पतालमा थिइन् । जलेका हात देखिन्, आँखामा आँसुका धारा बगिरहे, बुबाआमा सहनाज खातुन अन्सारीसँगै रोइरहेका थिए । सहनाजका अनुसार कैयौँ रात मुस्कान निदाउनै सकिनन्, रातभर रोइरहन्थिन्, दुखाइले चिच्याउँथिन्, बेडमा थाम्नै धौ-धौ पर्थ्यो । पेनकिलरले 'किल' गर्न नसकेको पीडा ! मानसिक रूपमा उस्तै विक्षिप्त । मुस्कान सुनाउँछिन्, "नमरे पनि मेरो जीवन सक्कियोजस्तो लाग्थ्यो, बाँच्नु बेकार ठान्थेँ । जे सम्झ्यो, त्यही अन्धकार लाग्थ्यो ।"

रुवाइमै बितिरहेका थिए दिनहरू । एक सातापछि फेरि एसिड हानेझैँ भयो, जब बाथरुमको ऐनामा आफ्नो अनुहार देखिन् । आधी जलेको अनुहार देख्दा आफैँसँग तर्सिन्, ऐना फुटेझैँ लागेछ । अनुहार नै यस्तो क्षतिविक्षत, किन बाँच्नु ! यस्तै-यस्तै सम्झँदै डाँको छाडेर रुन थालिन् ।

बल्ल-तल्ल आमाले बाथरुमबाट बेडसम्म ल्याइन्, मुस्कानले देखिन्, बुबा पनि रुँदै रहेछन् । नमीठो लाग्यो । बेडमा उत्तानो परेर माथितिर हेरिन्, सोचाइ शून्यमा झरिरहेको थियो, दुखाइबाट सकेसम्म उम्कन खोज्दै थिइन् । स्कुलमा पढेका कुरा सम्झिन् । सबै याद छ, गणितका सूत्रदेखि अंगेजीका व्याकरणसम्म । शिक्षक र साथीहरू आँखामा झल्झली नाचे ।

उनको मानसपटलमा एउटा जादूयी सोचाइ जन्मियो, 'मेरो अनुहारको आवरण पो जल्यो, दिमाग त जस्ताको तस्तै छ । मेरो जीवन सकिएको छैन । मज्जाले पढ्न सक्छु ।' मुस्कानले मुस्कराउँदै भनिन्, "त्यसपछि मैले कहिल्यै नरुने प्रण गरेँ, बुबाआमालाई पनि सम्झाएँ । आजकल पनि अति दुख्छ तर आँसु झार्दिनँ । बरु अहिले जति दुखेको छ, त्यो सबै बिर्सने गरी पछि पढ्छु भनेर आत्मबल बढाउँछु ।" मुस्कानले यसो भनिरहँदा छेवैका आमाबुबाको मुहारमा मुस्कान नाच्यो । सहनाजले सुनाइन्, "आजकल म पनि रुन छोड्या छु ।"

मुस्कानलाई लाग्छ, त्यो प्रण उनका लागि दोस्रो जन्म हो ।

मुस्कानको शैय्या नजिकै औषधी मात्र छैनन्, किताबहरू पनि छन् । पाकिस्तानमा तालिवानको आक्रमणमा परेकी मलाला युसुफको आत्मकथा *आई एम मलाला*, झमक घिमिरेको *जीवन काँडा कि फूल*, हेनरी केल्लरको *द स्टोरी अफ माई लाइफ* आदि-इत्यादि । चिकित्सकले उपहार दिएको *आई एम मलाला*ले उनलाई औषधीकै काम गऱ्यो । जति पनि पुस्तक पढ्दै जान्छिन्, आत्मबल चुलिँदै जान्छ । निश्चिन्त हुन्छिन्, बेडबाट उठेर मैले पुराना-नयाँ सपना पूरा गर्छु र गर्नुपर्छ । उनलाई जीवनप्रति प्रेम जगाउने अरू कारण पनि छन् ।

उनलाई पहिले लागेको थियो, एसिडपीडित पहिलो केटी मै हुँ । तर केही दिनअघि सीमा बस्नेत, जेनी खड्का र संगीता मगर अस्पताल पुगे, जो उनीजस्तै एसिडबाट डढेका थिए । शरीर जले पनि उनीहरूको मन जलेको थिएन, साहस मरेको थिएन । उनीहरूले मुस्कानलाई आफ्नो भोगाइ सुनाए, आँट र अठोट साटे, जीवनप्रतिको मोह पोखे, मुस्कानको मन थप हल्का भयो ।

मुस्कानलाई अमिताभ बच्चन, शाहरुख खान, बरुण धवन, कृति सानोनजस्ता बलिउड स्टारले भिडियो सन्देश पठाए । राजेश हमाल, पारस खड्का, सञ्चिता लुइँटेल, नीति शाह, शृंखला खतिवडालगायतका सेलिब्रिटीले भेटेर उनमा मुस्कान थपे । उनलाई मन पर्ने गायक राजु लामाले बेडमा सँगै बसेर गीत गाए । दैनिक कैयौँ अपरिचित अनुहारहरू स्वास्थ्यलाभको कामना गर्दै अस्पताल पुग्छन् । मुस्कानले मधुर स्वरमा भनिन्, "शरीर दुःखे पनि संसार मेरो साथमा छ । यो पनि उपचारजस्तै हुने रहेछ ।"

डेढ महिना पढाइ छुटिसक्यो, अझ त्यति नै समय स्कुल जान सक्दिनन् । ९ कक्षाको फाइनल परीक्षा दिन मुस्किल छ । छोरीलाई प्रेसर नहोस् भनेरै आमाको चाह छ, यो वर्ष 'ग्याप' गर्ने, अर्को वर्ष पढ्ने । आमाको यो कुरा उनलाई मन परेनछ । हामीतिर फर्केर भनिन्, "होइन, अर्को वर्ष त एसईई दिने हो । ९ कक्षा यही साल पास गर्छु ।"

योजना पनि सुनाइहालिन्, बिस्तारै दिमाग एकाग्र हुँदै छ, त्यसैले अब अस्पतालमै पढ्न थाल्ने, डिस्चार्ज भएर घर गएपछि अझ बढी पढ्ने, अरू साथीहरूसँगै परीक्षा दिने । जब स्कुल र पढाइको कुरा हुन्थ्यो, उनका आँखा उज्यालिन्थे । काटिएको कानको दुखाइ झेल्दै भए पनि मुस्कुराउन खोज्थिन् । लाग्थ्यो, उनको भौतिक शरीर मात्र शैय्यामा लमतन्न छ, मन त स्कुलमा साथीसँगै पढ्दै र खेल्दै छ ।

मेधावी मुस्कानको जीवनको लक्ष्य थियो, डाक्टर बन्ने । यो घटनाले लक्ष्य, जिम्मेवारी थपेको छ, डाक्टर त बन्ने नै, समाजसेवा पनि गर्ने, हिंसापीडितलाई सक्षम बनाउने अभियान चलाउने । दृढतासाथ भनिन्, "यति त गर्छु-गर्छु ।" ने

अस्पतालमा
मुस्कान खातुन

सरोज बैद्य

# चिनियाँ ड्र्यागनका पदचापहरू

छिमेकीका अपेक्षाहरूसँग सन्तुलन मिलाउँदै राष्ट्रिय स्वार्थको संरक्षण गर्नुपर्ने चुनौती नेपाली नेतृत्वलाई छ ।

**बसन्त बस्नेत**

२९ जेठ ०२४ । राजा महेन्द्रको ४८ औं जन्मोत्सव अवसरमा काठमाडौंको भृकुटीमण्डपमा रमाइलो मेला चल्दै थियो । चिनियाँ प्रदर्शन कक्षमा चिनियाँ कम्युनिस्ट पार्टी अध्यक्ष माओ त्सेतुङलाई यामानको तस्बिरमा स्थापना गरिएको तर 'बर्थडे ब्वाई' महेन्द्रको चाहिँ छुटाएको भन्दै राजा पक्षधर विद्यार्थीहरू तोडफोडमा ओर्लिए । चिनियाँ दूतावासको जिप फोडियो । अनि नेपाल-चीन मैत्रीसंघको पुस्तकालयमा आगो झोसियो ।

चीन त्यसको अघिल्लो वर्ष सुरु सांस्कृतिक क्रान्तिको उत्तापमा थियो । आफ्ना भूभागहरूमाथि उपनिवेश लाद्ने जापान त परै जाओस्, महाशक्ति बेलायत र अमेरिकासमेतलाई 'बाल' नदिने लहडबाजी चल्दो थियो । चरम घाटा सहेर, भोकै बसेर भए पनि 'आत्मनिर्भर अर्थतन्त्र' बनाइछाड्ने चिनियाँ महत्त्वाकांक्षाले आकाश छोएको थियो ।

चीनभन्दा ६५ गुणाजति सानो भएर पनि नेपालचाहिँ के कम ! सैन्यबलमा प्रजातन्त्र सिध्याउँदै 'राष्ट्रवाद' को हावा चलाइएको बेला थियो । नेपाली जाति अजेय छ, 'नपत्याए कसैले छोएर त हेरोस्' भन्दै ललकार्ने लहर थियो ।

चिनियाँ सरकारले काठमाडौंलाई कडा शब्दमा विरोधपत्र पठायो, जसमा 'साम्राज्यवादी, संशोधनवादी र प्रतिक्रियावादीहरूले यस्तो कार्य गरेर आफ्नै खप्पर फुटाउने काम गरेको हुँदा तिनको पछि लाग्नेले कडा नतिजा बेहोर्ने' चेतावनी दिन पुग्यो । न्यू चाइना न्युज एजेन्सीले त 'अमेरिकी साम्राज्यवादी, भारतीय प्रतिक्रियावादीहरूले नेपाली हुल्याहाहरूलाई चीनविरोधी अमर्यादित घृणित कार्य गर्न उक्साएको' आरोप नै लगायो ।

यसरी बिनाबाधाको नेपाल-चीन सम्बन्ध एउटा घटनाका कारण एकाएक ओस्सियो ।

काठमाडौंस्थित चिनियाँ कार्यवाहक राजदूत हरेक दिन परराष्ट्र मन्त्रालय पुगेर अमेरिका, रुस र भारतलाई गाली गर्थे । अब चिनियाँ दूतावाससँग कुरा गर्दैमा यो समस्या सल्टेला भन्ने पत्यार नेपाललाई भएन ।

परराष्ट्र सचिव छँदै भारतसँग तनाव सल्टाउन राजदूत बनाएर दिल्ली पठाइएका यदुनाथ खनाल तत्काल काठमाडौं झिकाइए । उनलाई परराष्ट्र सचिवमै पुनर्बहाली गरी चीन पठाउने निर्णय सरकारले गर्‍यो ।

तारन्तारको प्रयासपछि बल्ल नेपाली पक्षले बेइजिङको ठेगाना समाउन सक्यो । अर्को वर्ष १० जेठ ०२५ मा परराष्ट्रसचिव खनाल आफ्ना विभागीय मन्त्री रहेका उपप्रधानमन्त्री कीर्तिनिधि विष्टसँग चीन उडे । त्यहाँका प्रधानमन्त्री चाउ एन लाईसहित उपप्रधानमन्त्री तथा परराष्ट्रमन्त्री चेन यी, पार्टी उपाध्यक्ष लिन प्याओ आदिले सुरुमा कुराकानी गरे ।

चिनियाँ पक्षसँग नेपालले द्विदेशीय सम्बन्धमा खलल पार्ने कुनै नियत नभएको भन्दै भृकुटीमण्डप घटनाबारे प्रस्ट्याउन खोज्यो । दुई पक्षबीच लामा-लामा संवादहरू भए । अन्ततः बेइजिङले उत्साहपूर्ण वातावरणमा १९ जेठ ०२५ मा वक्तव्य निकाल्दै नेपालसँग पारस्परिक सौहार्दता अझै वृद्धि भएको वक्तव्य निकाल्यो । चीनसँग अविश्वास सकिएको भन्दै नेपाली टोलीले चैनको सास फेर्‍यो । भेटको अविस्मरणीय पक्ष, नेपाली पक्षले अध्यक्ष माओसँग पनि कुराकानीको मौका पायो ।

त्यस क्रममा नेपाली टोलीलाई झस्काउने एउटा घटना भयो, जब अध्यक्ष माओले चीन-नेपाल छलफलमा भारतको विषय प्रवेश गराए । याद रहोस्, त्यसबेला भारतसँग नेपालका अनेकौं खिचातानी चल्दै थिए ।

माओले भनेका थिए, 'हामी नेपालको बाध्यता बुझ्न सक्छौं । तर नेपालले भारतसँग राम्रो सम्बन्ध राख्नु आवश्यक छ ।' नेपालको भूराजनीतिक परिस्थितिको यथार्थबोध भएकाले नै माओले नेपाली पक्षलाई सहानुभूतिपूर्ण सल्लाह दिएका थिए । यसरी भ्रमणको क्रममा भारतीय प्रसंग उठेको सन्दर्भ उप्काउँदै यदुनाथ खनालले आफ्नो पुस्तक *नेपाल्स नन् आइसोलेसनिस्ट फरेन पोलिसी*मा लेखेका छन् ।

कुन्नि किन हो, माओकालीन चीनसँग नेपाली कूटनीति अघि बढेको आधा शताब्दीसम्म नेपाल-चीन छलफलको प्रसंगमा भारतले अर्थपूर्ण उपस्थिति पाइरह्यो । हरेक भेट होऊन् या वक्तव्य, नेपाली पक्षले घोकेर कण्ठ पारिएको पाठझैं दोहोर्‍याइरह्यो- एक चीन नीतिमा नेपाल अडिग छ । हामी आफ्नो भूभागभित्र चीनविरोधी कुनै पनि गतिविधि हुन नदिन

प्रतिबद्ध छौं । चीनले पनि दोहोर्‍याइरह्यो, भारतसँग राम्रो सम्बन्ध बनाइराख्नुस् । आजका दिनमा चीनसँग नेपालको आयात २ खर्ब र निर्यात २ अर्ब रुपैयाँजति छ । यो असमान अनुपात बढ्दो क्रममा छ । जबकि उसले अनुदान, ऋण आदि दिँदा पनि आफ्नो गच्छेअनुसार नभई, भारतभन्दा केही थोरै गरेर दिने गरेको छ ।

तर ५१ वर्षपछि त्यस्तो भएन ।

शक्तिमान चिनियाँ राष्ट्रपति तथा सत्ता सञ्चालक कम्युनिस्ट पार्टीका 'सर्वकालीन महासचिव' सी चिनफिङले यहाँको भूसामरिक नक्सा हल्लाउने गरी केही सन्देशहरू प्रवाहित गर्दै अघिल्लो साता बेइजिङ उडे । यसै पनि यो उच्चस्तरीय भ्रमणका लागि नेपालको प्रयत्न र प्रतीक्षा लामो थियो । आफ्नो उत्प्रेरणासमेतलाई मानेर जोडिएका दुई कम्युनिस्ट पार्टी सत्तारुढ भएका बेला चीनको यो स्तरको भ्रमण २३ वर्षपछि हुन सक्यो । अनि, उत्तरी ढोका खोल्ने र दक्षिणको सधैँको दबाबबाट मुक्त हुँदै भूराजनीतिक आयामलाई सन्तुलित बनाउने नेकपा सरकारको मनसाय बुझेरै चिनियाँ पक्ष यसपल्ट दृश्यमा प्रकट भयो ।

सी भ्रमण यसअघिका कुनै पनि चिनियाँ भ्रमणभन्दा दूरगामी महत्त्वको ठानिनुका पछाडि केही भूरणनीतिक अनि दीर्घकालीन मुद्दाहरूले प्रवेश पाएका छन् । ती यस्ता मुद्दा हुन्, जसका लागि नेपालका प्रधानमन्त्री केपी ओलीले चार वर्षअघि पहिलो प्रधानमन्त्रीकालयता निरन्तरको प्रयास लगाएका थिए । भारतीयलगायत कतिपय पश्चिमा कूटनीतिवेत्ताहरूले ओली उत्तर ढल्केको अनि नेपालका महत्त्वपूर्ण आर्थिक विकास परियोजनामा चीनले पकड जमाएको निष्कर्ष बीचका यी वर्षहरूमा निकालेका छन् । ओलीले भने नेपाल चीन, भारत वा कतैतिर पनि नढल्किने सफा परराष्ट्र नीति सञ्चालन गर्ने आफ्नो भनाइ दोहोर्‍याइरहेका छन् ।

त्यसो त नेकपाकै तत्कालीन प्रधानमन्त्री माधव नेपाल ०६५ पुसमा चीन जाँदा बेइजिङसँग नेपालको विकासका लागि रणनीतिक साझेदारी गर्ने घोषणा भएको

**समझदारी**

- शासनप्रसासन क्षमता वृद्धिमा सहकार्य
- सगरमाथा क्षेत्रको संरक्षण
- नेपालको राष्ट्रिय योजना आयोग र चीनको राष्ट्रिय विकास एवं सुधार आयोगबीच लगानी र सहकार्यका मुख्य परियोजना प्रवर्द्धन गर्ने
- आयुर्वेदिक औषधोपचार पद्धतिमा सहकार्य
- चीन-नेपाल सीमा वारपार रेलमार्ग निर्माणको सम्भाव्यता अध्ययन
- विपद् व्यवस्थापन न्यूनीकरणमा सहकार्य
- चीनको सुप्रिम पिपल प्रोक्युरेटर र नेपालको महान्यायाधिवक्ताको कार्यालयबीच आपसी सहयोग
- नेपाली फलफूल चीन निर्यात गर्न आवश्यक पूर्वाधार निर्माण
- द्विपक्षीय व्यापारसम्बन्धी संयुक्त कार्यदल
- द्विपक्षीय लगानी विस्तार गर्न संयुक्त कार्यदल गठन
- सुरुङ मार्ग बनाउने सहायतासम्बन्धी
- सीमा सुरक्षा व्यवस्थापन र कार्यालय स्थापना गर्न सहायता । दुवै पक्ष कानुन कार्यान्वयनकारी निकायबीच सूचना, क्षमता अभिवृद्धि र तालिम आदानप्रदानमा सहमत

**सम्झौता**

- सीमा व्यवस्थापन प्रणाली
- नेपाल र चीनका क्रमशः काठमाडौं महानगरपालिका तथा नान्जिङ र बुटवल उपमहानगरपालिका तथा सियान सहरबीच भगिनी सम्बन्ध स्थापना गर्ने
- त्रिभुवन विश्वविद्यालयमा चीनको कन्फ्युसियस इन्स्टिच्युट खोल्ने

**सन्धि**

दुवै पक्ष फौजदारी अभियोगसम्बन्धी कानुनी सहायता आदानप्रदान गर्न सहमत । साथै, यसअघि नै निचोडमा पुगिएको सुपुर्दगी सन्धिबारे समेत दुवै पक्ष आशावादी

*स्रोत : सम्झौता र समझदारीका बुँदा*

**स्वीकृत**

बीआरआईले दुवै मुलुकको आपसी सम्बन्ध अझ प्रगाढ बनाउने अवसर दिएको । नेपाल र चीनबीचको सम्बन्ध नयाँ चरणमा प्रवेश गरेको

**प्रशंसा**

ताइवान चीनको अभिन्न भूभाग रहेको र तिब्बत चीनको आन्तरिक मामिला भएको भन्दै एक चीन नीतिप्रति नेपालको समर्थन । चीनद्वारा नेपालको कदमप्रति प्रशंसा

**स्थापना**

चीनको छेन्दुमा नेपालको वाणिज्य दूतावास

**विस्तार**

रेलवे, सुरूङ, सडक, पानीजहाजका जनशक्तिको तालिमलाई चीनले बढावा दिने

**प्रस्ताव**

- तीन वर्षमा चीनले नेपालका कानुन कार्यान्वयनकारी निकायलाई बर्सेनि १ सय वटा तालिम दिने
- सुरक्षा निकायका अधिकारीहरूको भ्रमण बाक्लो बनाउने । संयुक्त अभ्यास, तालिम आदानप्रदान हुने
- नेपालमा १ सय वटा कन्फ्युसियस इन्स्टिच्युट खोल्ने

**माग**

कोसी राजमार्गको किमाथांका-लेगुवाघाट खण्ड बनाइदिन नेपालले आग्रह गरेपछि आफ्नो भावी योजनामा राख्ने भन्दै चीनले नेपाललाई विस्तृत प्रस्ताव पठाउन आग्रह

**चीनसँगका ४ वर्ष**

**०७२**
- बीआरआई सदस्य
- यातायात तथा पारवहन सम्झौता

**०७४**
बीआरआई अवधारणाको समझदारीपत्रमा हस्ताक्षर

**०७६**
यातायात तथा पारवहन प्रोटोकलमा हस्ताक्षर





थियो । तर नेपालमा त्यसबेला निरन्तरको सत्ता-छिनाझपटी र अस्थिरताका कारण कुनै पनि सरकारका प्रयासले विश्वास आर्जन र मूर्त रूप लिन सकेनन् ।

राजनीतिक स्थिरताको आभास दिलाउँदै नेपालमा बनेको बलियो सरकारका प्रधानमन्त्री ओलीका पछिल्ला प्रयत्नको प्रतिक्रियास्वरूप सीले काठमाडौंमा २५ असोजको आफ्नो मन्तव्यमा भूपरिवेष्ठित हुनुको पीडाबाट नेपाललाई मुक्त गर्दै भूजडित अवस्थामा पुऱ्याउने वचन दिएका छन् । सबैलाई थाहा भएको कुरा हो, कुनै पनि सिमानामा समुद्रले नछोएको नेपालका लागि भूपरिवेष्ठित हुनु भनेको आधारभूत रूपमा भारतवेष्ठित हुनु हो । पूर्व, पश्चिम र दक्षिणबाट भारतले घेरिएको नेपालका लागि चौथो उत्तरी दिशामार्फत भूजडित गराउने शब्दको भावार्थ प्रत्येक नेपाली र नेपालसँग सरोकार राख्नेहरूलाई ज्ञात छ ।

रोचक के भने बेइजिङबाट हिमाल छिचोलेर अनि उनै नरेन्द्र मोदीसँग नरिवल पानी पिउँदै ६ घन्टा दिल्लगी गरेर काठमाडौं ओर्ले पनि चिनियाँ राष्ट्रपतिले अघि-अघिका भ्रमणमा भट्टाउने गरेको भारतवाला 'क्लिसे' यसपालि दोहोऱ्याएनन् । नेपालबारे भारतीय चासो प्रेसहरूबाट छिटफुट प्रकट भए पनि त्यसले उत्रो अर्थ राखेन । बरु सी आफैंले काठमाडौंमा उभिएर बाँकी विश्वलाई केही कठोर सन्देशहरू प्रसार गर्न चाहे । उनले ताइवान र हङकङको सन्दर्भमा आफूलाई रक्षात्मक बनाउन खोजे, त्यसको कठोर प्रतिवाद गर्ने चुनौती दिए । अनि नेपालको स्वतन्त्रता र सार्वभौमिकताको आफूहरूले सम्मान गर्ने भन्दै त्यसमा कतैबाट खलल पुऱ्याउन खोजिए सह्य नहुने सन्देश पनि दिए । भारतीय प्रेस र विचार निर्माणकर्ता समूहहरूमा नेपाल भारतीय पोल्टाबाट बाहिर गएको, त्यसो हुनुमा ०७२ सालको नाकाबन्दी मुख्य कारक रहेको निष्कर्ष देख्न, पढ्न पाइयो । अनि उनीहरूले भारतले तत्कालै नेपाल नीतिबारे गम्भीर पुनर्विचार गर्दै क्षति नियन्त्रण गर्नुपर्ने सुझाव दिल्ली संस्थापनलाई फर्माए ।

पहिले-पहिले अरूतिर उति साह्रो चियोचर्चो नगर्ने, आफ्नै आन्तरिक मामिलामा अल्झिइरहने, अनाक्रमण र प्रतिरक्षा कूटनीतिमा विश्वास गर्ने चिनियाँ पक्ष यसपल्ट खुलेरै 'एसर्टिभ डिप्लोमेसी' तर्फ आउन खोजेको देखियो । अन्तर्मुखी चीन अब चुपचाप छैन भन्ने छनकहरू सन् २०१२ मा उदाएका सीसँगै एकपछि अर्का क्रियाकलापमार्फत बढेका छन् । नेपालको अर्को छिमेकी भारतसँग एकैसाथ मित्रता र वैरभाव, खासगरी बृहत्तर अर्थमा सहकार्य नै बढी प्रतीत हुने गरी बेइजिङ अघि बढेको बुझ्न सकिन्छ । हामीले दुई वर्षअघि देखेको डोक्लाम प्रकरण अनि त्यसलाई साम्य बनाउने मोदीको उहान भ्रमण कूटनीतिलाई त्यसैअन्तर्गत बुझ्न सक्छौं ।

बेइजिङ र काठमाडौंबीच अब रणनीतिक साझेदारी गर्दै अघि बढ्ने यस्तै अर्को वाक्य सम्झौतामा समाविष्ट छ । सीले *कान्तिपुर* दैनिकलाई उपलब्ध गराएको लेखमार्फत 'सुरक्षा सहकार्य बढाउँदै जाने' र रणनीतिक सञ्चार प्रगाढ बनाउने पनि उल्लेख गरेका छन् ।

प्रधानमन्त्री निकट स्रोतका अनुसार यो पल्ट चिनियाँ पक्ष केवल नेपालसँगको कुराकानीमा मात्रै केन्द्रित थियो । बीआरआईको नेपाली संस्करण ठानिएको ट्रान्स हिमालयन मल्टी डाइमेन्सनल कनेक्टिभिटी नेटवर्कअन्तर्गत समेटिएका रेल, सडक, बन्दरगाह, सूचना-सञ्चार तथा उड्डयनका केही पक्षमा भारत जोडिन सक्ने देखिए पनि यी विशेषगरी नेपाल र चीनबीचकै विकास सहकार्य मामिलाअन्तर्गत मानिएका छन् । नेपाली पक्षबाट आवश्यक तयारी नपुगेको भन्दै चिनियाँ पक्षबाट सरप्राइज घोषणा त भएन । तर २३ वर्षयता यो स्तरको भ्रमण सम्भव हुन सक्नुलाई नेपाली संक्रमणकालका अलमलहरू सकिएपछिको स्थायित्वतर्फको यात्रामा हातेमालो गर्न चिनियाँ पक्ष आइपुगेको अर्थमा काठमाडौंले बुझेको छ ।

चीनले त आफूलाई सीधा कूटनीतितर्फ प्रवेश गराएको छनक दिइहाल्यो । यस्तोमा नेपालले के गर्ने त ? चीनमा सुई वंशको शासन अन्त्यसँगै ताङ वंशको राज सुरु हुँदा नेपाल लिच्छविकालमा थियो । देशदेशावर घुम्दै काठमाडौं उपत्यका छिरेका चिनियाँ यात्री ह्वेन साङले यहाँको बारेमा उल्लेख गरेसँगै राज्य पक्षहरूबीच सम्बन्ध सुरु भएको देखिन्छ । त्यसयताका अनेकौं युग र वर्षहरूमा तिब्बत मात्रै नभई स्वयं चीन साम्राज्यसँग नेपालको मैत्री तथा युद्ध दुवै भएको देखिन्छ । चीनमा कम्युनिस्ट पार्टीद्वारा जनवादी क्रान्ति भएयता नेपालसँग समस्यारहित सम्बन्ध रहेको व्याख्या हुने गरेको छ । तर भृकुटीमण्डप काण्डसहित विगत वर्षहरूका इतिहास पल्टाउँदा नेपालले चीनसँगको बहुआयामिक सम्बन्धको जटिलताप्रति पीठ फर्काउने स्थिति पनि रहेन । अनि भारतसँगको दैनिक कार्यव्यापारलाई अतिरेक भावनामा नबहकिई वस्तुनिष्ठ मूल्यांकन गर्नु नै पर्नेछ । अब उत्तरी ढोका खोल्ने पहलकदमीबाट नेपाल पछाडि फर्कने छैन भन्ने ऐतिहासिक निर्णय दुवै देशका सरकारहरूले सोचीविचारी पटक-पटकका छलफलबाट टुंगो लगाइसकेका छन् । रेल, सुरुङ, सडकमार्फत खोलिने त्यो प्रस्तावित ढोकाबाट चिनियाँ ड्रागन हिमालमुन्तिर ओर्लंदै छ । महाशक्तिउन्मुख त्यो ड्रागनका पदचापहरू सुनिँदै गर्दा नेपालले आफ्नो राष्ट्रिय स्वार्थ र प्राथमिकताहरू कसरी खुट्याउला, बेला छँदै सघन विमर्श चाहिएको छ ।

यहाँ फेरि तिनै यदुनाथ खनालको स्मरण गर्नु उचित हुन्छ । पछि माओ त्सेतुङको निधन र देङ स्याओ पिङको उदार शासनको सूत्रपात भएलगत्तै चीनका लागि राजदूत बन्न पुगेका खनालले लेखेका छन् : 'काठमाडौंका प्रेसमा केही तर्कहरू छापिए, भारत र चीनका बीचमा

## रणनीतिक रोडम्याप

**रुचि**

छरिएर रहेका हिमाली भेगका बस्ती र विकास एकीकृत बनाउने नेपालको प्रस्तावमा चीन सकारात्मक

**विस्तृत छलफल गरिने**

- सिन्धुपाल्चोकको लार्चामा तातोपानी फ्रन्टियर इन्स्पेक्सन स्टेसनलाई पूर्ण क्षमताको बनाउन
- व्यापार र लगानी प्रवर्द्धनलाई ध्यानमा राखेर चिनियाँ बैंकका शाखा खोल्न नेपालले सहयोग गर्ने
- मदन भण्डारी विश्वविद्यालय खोल्ने नेपालको चाहनालाई चीनले ठूलो महत्त्व दिएको । चिनियाँ पक्षले स्थलगत अध्ययनपछि दुवै पक्ष सहायताबारे थप छलफल गर्ने

**एकसाथ**

सगरमाथाको उचाइ नाप्ने दुवै देशको संयुक्त टोली घोषणा हुने

*स्रोत : संयुक्त वक्तव्य*

युद्ध भयो भने नेपालले फाइदा पाउला अनि नेपालमाथिको भारतीय दबाब पनि कम भएर जाला । कूटनीतिमा त्यस्तो हुँदैन ।'

खनालले लेखेझैं भारत र चीन एक दिन बेस्सरी बाझ्लान् अनि त्यसको फाइदा हामी उठाऔंला भनी सोच्ने दिन अब गए । एसियातिर सर्दै गएको विश्वशक्तिलाई नेतृत्व गर्न आज चीन र भारत तयार छन् । सी र मोदीको महाबलीपुरम् मिटिङलाई भारतका लागि चीनका राजदूत ल्यु शाओयीले *इन्डियन एक्सप्रेस*को लेखमार्फत ड्रयागन र हात्तीको टुंयागो नृत्यका रूपमा चित्रित गर्दै अरू ७० वर्षसम्म चीन-भारत मैत्रीमार्फत एसियाली शताब्दी बनाउनेमा आशा व्यक्त गरेका छन् । आगामी शताब्दी एसियाको हुने यस्ता दाबीहरूको अन्तर्यमा त्यो चीनको शताब्दी हुने कि भारतको भन्ने तँछाडमछाड पनि सन्निहित छ । तर एकअर्काको आर्थिक, सुरक्षा तथा कूटनीतिक सहायताबिना त्यो शताब्दी प्राप्त नहुने यथार्थबोधबीच उनीहरूबीचको मतान्तरले प्रगतिको तेज रफ्तारलाई असर नगर्ने भइसक्यो । डोक्लाम प्रकरणलाई शान्त गर्न सी र मोदीले चीनको वुहानमा दुई दिनभित्र ६ पल्ट गरी १० घन्टासम्म त्यहाँका ताल किनारमा घुमीघुमी चलाएको वार्ता हाम्रो सम्झनामा ताजै छ । यसपल्ट पनि महाबलीपुरम्‌बाट फर्कंदा सीले मोदीलाई फेरि यस्तै अर्को मिटिङका लागि निम्ता दिइसकेका छन् ।

सीको भ्रमण सार्थक बनाउनका लागि छोटो अवधिको तयारी भनिए पनि तुलनात्मक परिपक्वता देखाएको परराष्ट्र मन्त्रालयले प्रस्ट्याएको छ : कुनै बिलकुल नयाँ काम गरिएको होइन । उत्तरतिर ढोका खोल्ने पहलकदमीको गतिलाई केही छिटो गरेको भने पक्कै हो । *नेपाल*सँगको कुराकानीमा परराष्ट्रमन्त्री प्रदीप ज्ञवालीले यसलाई जोड दिँदै असंलग्न र स्वायत्त परराष्ट्र नीति सञ्चालनका लागि नेपाल सक्षम रहेको यथार्थ यसपल्ट पुनः प्रतिविम्बित भएको बताए ।

०७२ मा भूकम्पले जर्जर बनेको देशमाथि थोपरिएको अमानवीय नाकाबन्दीले नेपाललाई भौगोलिक जटिलता चिर्दै हिमालय छेडेर उत्तरतिर चिहाउन दृढ बनाएको थियो । अब चीनसँगको हाम्रो सम्बन्ध भारतसितको प्रतिक्रिया जस्तो देखिए पनि हाम्रै आफ्नो इतिहासको आवश्यकताबाट निर्देशित थियो भन्ने ऐतिहासिक चेतबाट निःसृत थियो । कतिपयले भन्ने गरेझैं त्यो दुइटा विचारधारात्मक सामीप्य भएका दुई कम्युनिस्ट पार्टीका सरकारहरूको चाहनाबाट होइन, ०१६ मा प्रधानमन्त्री छँदा बीपी कोइरालाले अघि सारेको पाइलाकै सुझबुझपूर्ण निरन्तरता थियो ।

र, सयौं वर्षसम्म आफूभित्रै रमाएर अनि गुम्सिएर बसेको अन्तर्मुखी चीन आज सिंगै हिमवत्‌खण्डका छिमेकी देशहरूको हातेमालो बढाएर विश्वमञ्चमा राज गर्न तम्सिँदै छ । यस्तोमा ऊसित १४ सय किमि सीमा जोडिएको नेपालले मैत्री गतिशील बनाउन प्रस्ताव गर्नु र चीनले काँध थापेर यसको स्वागत गर्नु एकदमै स्वाभाविक हुन्थ्यो । चिनियाँ कम्युनिस्ट पार्टीको १९ औं महाधिवेशनमा महासचिव सीले भनेका थिए, 'टाढाका मित्रहरूभन्दा छिमेकी नजिकको हुन्छ । मर्दा अस्थि उठाउने पनि यही हुन्छ । घरमा केही समस्या पर्दा वा चोर पस्दा सघाउन आउने पनि उही हुन्छ ।' सीले यसलाई पेरिफेरियल पोलिसी नाम दिएका छन् । नेपाल भूपरिवेष्ठित नभई भूजडित देश भएको प्रधानमन्त्री केपी ओलीको भनाइमै सही थाप्दै उनले दोहोऱ्याउनु निकै अर्थपूर्ण छ ।

सीले यो विचार यस्तो समयमा अघि सारेका छन्, जति बेला २०१४ पछि फेरिएको भारतीय संस्थापनले 'छिमेक पहिले' नीति अघि सारेको छ । भलै हामीले नाकाबन्दी त्यसैको अर्को साल बेहोऱ्यौं । आज नेपालको स्थिति आधा शताब्दीअघिको भारतको जस्तो छ, जुन बेला सोभियत संघ अस्तित्वमा थियो, अनि अमेरिका विश्वशक्ति बन्दै थियो । विश्वको समग्र शक्ति कसले आफूतिर बढी खिच्ने भन्नेमा यी दुईको प्रतिस्पर्धा चल्दै गर्दा दक्षिण एसियाको मुख्य शक्ति भारतले तीबाट फाइदा उठाउनुसम्म उठायो । सैद्धान्तिक मान्यताका आधारमा जवाहरलाल नेहरु एक लोकतन्त्रवादी थिए तर तिनले साम्यवादी सोभियत संघको सहायतामा भारतलाई आर्थिक फड्कोतर्फ दिशानिर्देश गर्न सक्दो जोड लगाए ।

आज विश्व भूसामरिक सन्तुलनको नक्सा बदलिएको छ । सोभियत संघको पतनसँगै शीतयुद्धको अन्त्यपछि विश्वमञ्चमा अमेरिका एकछत्र हावी थियो । धेरै लामो आन्तरिक उतारचढाव झेल्दै चीन बल्लतल्ल अमेरिकी महाशक्तिलाई चुनौती दिने ठाउँमा आइपुगेको छ । फलतः आज सैन्य, प्रविधि र पैसाको प्रतिस्पर्धामा अमेरिका एक्लो प्रभुत्वमा रहेन । *इकोनोमिस्ट* म्यागजिनले चीन विश्व कूटनीतिमा सफ्ट पावर नभई आक्रामक र उद्दण्ड प्रकारको 'सार्प पावर' सहित अघि बढेको विश्लेषण गरेको थियो । चिनियाँ शक्ति अभ्यासको शैलीबारे पश्चिमा लोकतन्त्रहरूमा आलोचनात्मक कोणबाटै बढी छलफल हुने गरेको छ ।

**चीन बीआरआईमार्फत आफ्नो पुरानो विरासत फर्काउन अघि सरेको छ । भारत त्यसको हस्ताक्षरकारी नरहे पनि चीनसँग खुलेर सहकार्य गर्न सक्ने, त्यसका लागि अमेरिकालाई सोधिराख्नु नपर्ने हैसियतमा उक्लिएको छ ।**

यस्तो अवस्थामा चीन बीआरआईमार्फत आफ्नो पुरानो विरासत फर्काउन अघि सरेको छ । भारत त्यसको हस्ताक्षरकारी नरहे पनि चीनसँग खुलेर सहकार्य गर्न सक्ने, त्यसका लागि अमेरिकालाई सोधिराख्नु नपर्ने हैसियतमा उक्लिएको छ । यस्तोमा माथि भनिएझैं हात्ती र ड्रयागनको स्वाभाविक मिलन हुन गएको छ । अब नेपालले दुइटाको सहकार्य र प्रतिस्पर्धा दुवैबाट फाइदा लिन सक्ने अवस्थामा आइपुगेको छ । हाम्रो नेतृत्वको परीक्षा पनि ठीक यही बिन्दुमा हुन गइरहेको छ, नेपाल एकका विरुद्ध अर्कोलाई उपयोग गर्ने अपरिपक्व चलाखी देखाउने ठाउँमा उभिन्छ कि आफ्नो आत्मविश्वासका साथ दुवैसँग मैत्री राख्ने अवस्थामा उक्लन्छ । नेहरुकालीन भारतले सोभियत र पश्चिमासँग राखेको सन्तुलित सम्बन्धको उदाहरण यहाँनेर काम लाग्न गएको छ ।

प्रधानमन्त्री ओलीले २ कात्तिकमा *कान्तिपुर*लाई अन्तर्वार्ता दिँदै सम्बन्धलाई सफा राख्ने, एकका विरुद्ध अर्को कार्ड नखेल्ने प्रस्ट शब्दमा भनेका छन् । त्यसको परीक्षण अब हुनेछ किनकि चिनियाँ विदेशमन्त्री वाङ यीसँगको भेटमा प्रचण्डले अमेरिकालक्षित गरेको टिप्पणी काठमाडौंबाट होइन, बेइजिङबाट खुलासा भएको केही साताअघिको यथार्थ ताजै छ । ने

आवरण तस्बिर : *ब्लुमबर्गडटकम*





# 'हामीसँग व्यवस्थापन क्षमता छ'

**प्रदीप ज्ञवाली**, परराष्ट्रमन्त्री

**चिनियाँ राष्ट्रपतिको बहुप्रतीक्षित भ्रमण कसरी सम्भव भयो ?**

लामो समय आन्तरिक द्वन्द्व, संक्रमण र राजनीतिक अस्थिरताको व्यूहमा परेर अन्तर्राष्ट्रिय सम्बन्ध खुम्चिँदै औपचारिकजस्तो मात्र भएको थियो । नेपाललाई मित्रहरूबाट सद्भाव प्राप्त भइरहे पनि सहयोगका लागि अपेक्षित वातावरण बनाउन सकेका थिएनौं । देशभित्र आएको राजनीतिक परिवर्तन, सम्भावनाको उदय र सचेतन प्रयत्नको जोडले चिनियाँ राष्ट्रपतिको भ्रमण सम्भव भयो ।

**भ्रमणको सफलता के-केलाई मान्ने ?**

राष्ट्रपति सीको आगमन नै ठूलो सन्देश हो । त्यसले नेपालमा सुरक्षित, आकर्षक र अनुकूल वातावरणको सन्देश दिन्छ । नेपालसँग उच्च तहका भ्रमण आयोजना गर्ने, व्यवस्थापन गर्ने क्षमता छ भन्ने पुनर्पुष्टि गरेको छ । असमान भूगोल, जनसंख्या र विकासका दुई मुलुक कसरी असल सम्बन्धमा बाँधिन सक्छन् भन्ने उदाहरण भ्रमणले दिएको छ ।

**इन्डो-प्यासिफिक रणनीतिले नेपाललाई सामरिक भूमरीमा पार्ने संकेत गरिरहेका बेला चीनसँग फेरि रणनीतिक साझेदारीका कुराले समस्या ल्याउँदैन ?**

विकास र समृद्धिका लागि रणनीतिक साझेदार भनेको लामो, टिकाउ र फराकिलो सम्बन्ध हो भनेर बुझ्नुपर्छ । यसलाई अर्को रूपमा बुझ्नु-बुझाउनु अनि अनावश्यक विवादमा ल्याउनु जरुरी छैन ।

**सुपुर्दगी सन्धिकै कारण नेपालले लोकतान्त्रिक मूल्य-मान्यतामा सम्झौता गर्नुपर्ने त होइन ?**

आतंकवाद, अन्तरदेशीय अपराध, लागूऔषध ओसारपसार, हातहतियारको अवैध ओसारपसार, मानव बेचबिखनविरुद्ध नेपालको ठोस प्रतिबद्धता छ । त्यस आधारमा आवश्यकताअनुसार सुपुर्दगी सन्धि हुन सक्छ । हाम्रो लोकतान्त्रिक मूल्य-मान्यतामाथि प्रश्न उठाउनु भनेको वस्तुगत आधारभन्दा राजनीतिक आग्रह मात्रै हो ।

**अहिलेको समझदारी गत वर्ष प्रधानमन्त्री केपी ओलीको बेइजिङ भ्रमणको छायाकपीजस्तै देखिन्छ नि ?**

यस्ता भ्रमणमा समझदारीका विभिन्न चरण हुन्छन् । पहिलो चरणमा समझदारीमा पुगिसकेको हुँदैन तर नोटिसमा लिइसकेको हुनाले संयुक्त वक्तव्यमा पर्छन् । प्रधानमन्त्रीको बेइजिङ भ्रमणमा कतिपय विषय चाहनाको रूपमा आएका थिए तर पर्याप्त छलफल नभएर निष्कर्षमा पुगेका थिएनन् । यसबीचको गृहकार्यपछि हिजोका चाहनालाई मूर्त रूप दिए । कतिपय विषय विभिन्न उच्चस्तरीय भ्रमणमा दोहोरिनु स्वाभाविकै हो ।

**राष्ट्रपति सीले ५६ अर्ब सहयोग गर्ने घोषणा गरे पनि लिखित रूपमा आएन नि ?**

संयुक्त वक्तव्यमा राख्न पनि सकिन्थ्यो तर राखिएन । चीनको त्यो गैरबजेटरी सहयोग हो । नेपालको प्राथमिकताका आधारमा छनोट परियोजनामा खर्चिन सकिने बजेट हो ।

**गेमचेन्जर परियोजनामा सरकारले गृहकार्य गरेन ?**

चीनसँगको सम्बन्धमा गेमचेन्जर परियोजना भनेको कनेक्टिभिटी नै हो । अत्याधुनिक कनेक्टिभिटीबिना उत्पादन गर्न सकिँदैन । सेवा, वस्तु र जनताको प्रवाह ल्याउन सकिन्न । अर्थतन्त्रमा गति ल्याउन सकिँदैन । त्यसो भएकाले कनेक्टिभिटीलाई प्राथमिकतामा राखेका छौं ।

**मदन भण्डारी प्राविधिक विश्वविद्यालय चित्लाङमा अनुपयुक्त भएको चिनियाँ पक्षको भनाइ छ । ठाउँबारे पुनर्विचार हुन्छ ?**

हामीले स्थलगत अध्ययनका लागि आग्रह गरेका थियौं । उहाँहरूले दिएको प्रतिवेदन मैले पढ्न पाएको छैन । तर विश्वविद्यालय जहाँ उपयुक्त हुन्छ, त्यहीँ खोल्ने हो । सरकारको चाहना काठमाडौंबाहिर खोलौं भन्ने हो ।

**योजना पूरा गरेरै छाड्नुपर्ने राष्ट्रपति सीको सुझावलाई सरकारलाई कसरी लिएको छ ?**

काममा ढिलासुस्ती नेपाली प्रशासन संयन्त्र र निजी क्षेत्रसमेतको चारित्रिक विशेषता भएको छ । उहाँले नभन्नुभएको भए पनि हामीले महसुस गर्नुपर्ने विषय हो । कुनै पनि परियोजना समयमै सकाउने गरी दृढ संकल्प देखिँदैन । उसो त, भेरी-बबई डाइभर्सन, भैरहवा एयरपोर्ट, पोखरा एयरपोर्ट, पेट्रोलियम पाइपलाइन, चक्रपथ स्तरोन्नतिलगायतका परियोजनामा समयभन्दा पहिला काम भए । प्रतिबद्ध भए परिणाम आउने रहेछ भन्ने त यसैले देखाउँछ ।

**चीन र भारतबीचको कुराकानीले क्षेत्रीय प्रभाव पार्न सक्छ ?**

चीन र भारतबीच बढ्दै गएको सम्बन्धप्रति नेपाल उत्साहित छ । चीन र भारतबीच जति सुमधुर सम्बन्ध हुन्छ, क्षेत्रीय स्तरमा त्यति नै सकारात्मक प्रभाव पर्छ र नेपाल लाभान्वित हुन्छ । चीन-भारतको छलफलले क्षेत्रीय सहकार्यको वातावरण बन्दै गएको हो भने नेपालले त्यसको स्वागत गर्छ । ने

**कुराकानी : बसन्त/योगेश**

# सी भ्रमणको परकम्प


रूपक सापकोटा

सन् १९६२ मा चीन-भारतबीच जारी युद्ध र त्यसका सम्भावित दुष्परिणामबाट सिंगो क्षेत्रमा संशय छाएको थियो। नेपाल आफ्ना निकटतम छिमेकीबीच द्वन्द्व र आफ्नो सुरक्षालाई लिएर संशयमा गुज्रिरहेको थियो। त्यस बखत नेपाल आफ्नो पक्षमा उभियोस् भन्ने लालसा भारतमा देखिन्थ्यो । तर नेपालले आफूलाई तटस्थ राख्दै असंलग्नताको नीतिलाई जोड दियो। नेपालले असहज भूराजनीतिक दबाब महसुस गरिरहेका बेला चीनका उपप्रधानमन्त्री एवं विदेशमन्त्री छन यीले 'कुनै पनि विदेशी सेनाले नेपालमा आक्रमण गर्ने मूर्खतापूर्ण प्रयास गरेको खण्डमा चीनले नेपाली जनताको पक्ष लिनेछ' भन्ने सार्वजनिक अभिव्यक्ति दिए। यसले नेपाललाई बलियो ढाडस मिल्यो। सम्भवतः त्यतिबेलादेखि नै नेपालीले चीनलाई एक 'आदर्श' छिमेकीका रूपमा लिन सुरु गरेको हुनुपर्छ।

त्यसयता 'लिपुलेक सहमति' एक त्यस्तो परिघटना हो, जहाँ नेपालको उपस्थिति र सहमतिबेगर चीन र भारतले आफ्नो 'कन्भरजेन्स' का आधारमा लिपुलेकलाई द्विपक्षीय व्यापार मार्गका रूपमा विकास गर्ने सहमति उद्घोष गरे। नेपालले तत्कालै चीन र भारतसँग आफ्नो असहमति जनायो। सम्भवतः चीनलाई हेर्ने सवालमा नेपालको धारणामा बदलाव नआओस् भन्ने मर्मलाई बुझेरै हुनुपर्छ, चीनले 'अनौपचारिक' तवरमा लिपुलेक सहमतिमा कमजोरी स्वीकार्‍यो।

भूराजनीतिक असमञ्जसका बाबजुद पनि चीनप्रति नेपालको अपार सद्भावबाट आल्हादित चीनका लागि नेपालसँगको सम्बन्धलाई रणनीतिक तबरमा विस्तार गर्न यसले पनि महत्त्वपूर्ण भूमिका खेलेको अनुभव गर्न सकिन्छ।

चीनका राष्ट्रपति सी चिनफिङको नेपाल भ्रमणको विविध कोणबाट विश्लेषण हुने क्रम जारी छ। अन्तर्राष्ट्रिय विश्व राजनीतिमा ठूला र साना शक्तिबीचको अमिल्दो सम्बन्धका कारण नेपालजस्ता साना/मझौला मुलुकका लागि यस्ता उच्चस्तरीय भ्रमण आफैँमा दुर्लभ अवसर हुन् भन्नेमा कुनै सन्देह छैन। नेपाललाई २३ वर्षपछि यस्तो संयोग प्राप्त भयो।

अर्कातर्फ, इन्डो-प्यासिफिक रणनीतिको माध्यमबाट बढ्दो अमेरिकी चासो र उपस्थितिले नेपालको रणनीतिक महत्त्वलाई पुनः ताजगीकरण गरिदिएको छ। अमेरिकाको नेपालप्रतिको चासोले सी भ्रमणका लागि केही हदसम्म उत्प्रेरकको भूमिका खेलेको हुनुपर्छ। त्यसो त, सीको नेपाल भ्रमण र यसबीच भएको रणनीतिक साझेदारीको सन्दर्भद्वारा उत्पन्न भूराजनीतिक परकम्प दिल्ली हुँदै वासिङ्टनसम्म अनुभूति गर्न सकिन्छ। सी भ्रमणले उत्पन्न गरेको भूराजनीतिक परकम्पसहित सांगोपांगो विश्लेषण क्रमशः हुँदै जाला। समग्रमा, सी भ्रमणका पदचाप धेरै अर्थराजनीतिक, थोरै रणनीतिक अनि केही लाक्षणिक पनि रहेका छन्।

**नीतिगत बदलाव** : सत्ताको बागडोर सम्हालेलगत्तै सी चिनफिङले छिमेकी मुलुकसँगको सम्बन्धलाई महत्त्व दिँदै चीनले परिधि कूटनीति (पेरिफेरियल डिप्लोमेसी) का सम्बन्धमा गहन छलफल चलायो । यस सिलसिलामा बेइजिङमा एक महत्त्वपूर्ण अन्तर्राष्ट्रिय कन्फरेन्स आयोजना भएको थियो। संयोग, नेपालका लागि हालकी राजदूत होऔ याङछी त्यस प्रयोजनमा मुख्य संयोजनकर्ताको भूमिकामा थिइन् । त्यस क्रममा चीनले छिमेकीसँगको सम्बन्धलाई चरित्र र विशेषताका आधारमा अलग-अलग छिमेक नीति अवलम्बन गर्नुपर्ने सुझायो।

भारतीय नाकाबन्दीलगत्तै चीनको बेइजिङमा पंक्तिकार स्वयं सहभागी एक अन्तर्राष्ट्रिय कन्फरेन्समा नेपालसम्बन्धी जानकार चिनियाँ विद्वत् वर्गले नेपालको खुलेर गुनासो गरेका थिए। उनीहरू गुनासोको सारमा, नेपाल आफूलाई संकट परेका बेलामा मात्र चीनको साथ खोज्ने गरेको भन्ने देखिन्थ्यो। त्यसो त सदैव नेपाली नेताहरूसँगको संवादमा चीनको राजनीतिक नेतृत्व नेपाललाई भारतसँग राम्रो सम्बन्ध राख्न सुझाउने गर्थ्यो। तर चीनका राष्ट्रपति सीले भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँगको भेटमा नेपालको विकास र समृद्धिमा मिलेर सहयोग गर्नुपर्ने अभिमत जाहेर गरे, जसबाट के बुझ्न सकिन्छ भने लामो समयदेखि नेपाललाई भारतको प्रभाव क्षेत्र र त्यसका आधारमा चीनले नेपाललाई दक्षिण एसिया भित्र 'सवरिजन' को नीतिमा साँघुराएर हेर्दै आएको थियो। अहिले विकास भएका तमाम घटनाक्रमबाट चीनले अबउप्रान्त नेपाललाई अलग अवयव (इन्टिटी) का रूपमा व्यवहार गर्ने स्पष्ट छनक दिएको छ।

संविधान जारी भएसँगै नेपालको राजनीतिक नेतृत्वमा देखिएको 'रणनीतिक स्वायत्तता' (स्ट्राटेजिक एटोनमी) को प्रयोग गर्ने बढ्दो आत्मविश्वास र सामर्थ्यलाई चीनले सूक्ष्म अध्ययन गरिरहेको थियो । भारतले नेपालमाथि लगाएको आर्थिक नाकाबन्दीले नेपालको अन्तर्राष्ट्रिय सम्बन्ध सञ्चालनमा खोजी भइरहेको उक्त 'रणनीतिक स्वायत्तता' लाई थप मलजल गर्‍यो । लामो समयदेखि छलफलमा रहेको चीनसँगको यातायात तथा पारवहन सम्झौता र चीनको महत्त्वाकांक्षी परियोजना बीआरआईमा नेपाल क्रमशः सहमति र सहभागी हुनु आदिमा उक्त नाकाबन्दीले अप्रत्यक्ष उत्प्रेरकको भूमिका



खेल्यो । तसर्थ, नेपालले चीनसँग विद्यमान कार्यनीतिक समानतालाई रणनीतिक साझेदारीमा विकास गर्नु खोज्नु मूलतः नेपालको रणनीतिक स्वायत्तताको प्रयोगलाई सघन बनाउन मद्दत पुग्ने अर्थमा बुझ्नुपर्छ ।

**अर्थराजनीतिक पहलु** : पछिल्लो समय विश्वव्यापी आर्थिक सहकार्य स्वरूपमा व्यापक बदलावको अनुभव गर्न सकिन्छ । सामान्यतः ठूला मुलुकले अनुदानभन्दा सहुलियत ऋण र वैदेशिक लगानीमा जोड दिन थालेका छन् । त्यसैले नेपालले पनि चीनसँग सहमति भएका प्राथमिकताका क्षेत्रमा अनुदानबाहेक प्रत्यक्ष वैदेशिक लगानी वा सहुलियतपूर्ण ऋणका माध्यमद्वारा अधिकतम चिनियाँ पुँजी भित्र्याउन सक्नुपर्छ । विगतमा बीआरआईमार्फत कार्यान्वयनमा लैजाने परियोजनाको छनोटमा राजनीतिक चासो र राष्ट्रिय आवश्यकताको तालमेल नमिलेको गुनासो हुने गरेको थियो । नेपालको राष्ट्रिय अर्थतन्त्रको विविधीकरण गर्ने विषयको गाम्भीर्य र चीनसँगको यातायात तथा पारवहन सम्झौता भएको पृष्ठभूमिमा नेपालको जोड चीनसँग कनेक्टिभिटी विस्तार गर्ने परियोजनाको छनोट वस्तुतः सही छ, जसमा सीमापार रेल परियोजना निर्माणलाई दीर्घकालीन 'सिग्नेचर प्रोजेक्ट' रूपमा समेटिएको छ ।

**भरपर्दो शक्तिको साथ** : विगतमा चीनको राजतन्त्रामक शक्तिप्रतिको विशेष लगाव सबैलाई अवगत भएकै हो । राजतन्त्रको अन्त्यपछि चीन नेपालमा एक भरपर्दो मित्रको खोजीमा थियो भन्दा अतिशययुक्त नहोला । माओवादी शान्ति प्रक्रियामा आएसँगै चीनले उसलाई सम्भावित मुख्य साझेदार शक्तिका रूपमा हेरेका पनि थियो । तत्कालीन माओवादी पार्टी र एमालेबीचको एकतापछि चीनले नेपालमा पुनर्गठित नेपाल कम्युनिस्ट पार्टीको उदयलाई सम्भावित बलियो साझेदारका रूपमा हेर्ने थालेको पाइन्छ । त्यसयता दुई पार्टीबीचको बाक्लो संवाद र सहयोग आदान-प्रदानलाई हेर्ने हो भने पनि उक्त निष्कर्षमा पुग्न केही हदसम्म सजिलो हुन्छ । सी चिनफिङको नेपाल भ्रमणको पूर्वसन्ध्यामा भएको दुई पार्टीबीचको अन्तरसंवाद त्यस दिशातर्फको एउटा शक्तिशाली सन्देश थियो ।

**त्रिदेशीय सहकार्यको भविष्य** : भारत शासित कश्मीरको राजनीतिक हैसियत बदल्ने भारतीय निर्णयपछि उत्पन्न असमझदारीबाट 'उहान भेट' को दोस्रो संस्करण 'चेन्नाई कनेक्ट' हुने-नहुने संशय थपिएको थियो । यही पृष्ठभूमिमा चीन र भारतबीच विविध तनाव जारी थिए तापनि दुई नेता आ-आफ्ना कार्यनीतिक प्रयोजनका लागि भारतको चेन्नाईमा भेट गर्न तयार भए ।

उहान भेटमा झैँ चेन्नाईको अनौपचारिक भेटमा पनि दुईपक्षीय मुद्दाबाहेक क्षेत्रीय मुद्दा र त्यसमा हुन सक्ने सम्भावित सहकार्यका सम्बन्धमा पनि विषय प्रवेश भएको पाइन्छ । पहिलोपल्ट चीनका राष्ट्रपति सी चिनफिङले मोदीसँगको अनौपचारिक भेटमा औपचारिक तबरमा क्षेत्रीय सहकार्यको प्रस्थानबिन्दुका रूपका 'चाइना-इन्डिया प्लस' सहकार्यको अवधारणा महत्त्वसाथ उल्लेख गरेका छन्, जसबाट 'चेन्नाई कनेक्ट' द्वारा सम्बोधित सी-मोदी भेटवार्तामा नेपालसमेत 'फिगर' भएको स्पष्ट देखिन्छ । प्लस फर्मुलाको अवधारणा स्वयं चीनका लागि पनि नयाँ हुनेछ । चीनले विकास गर्न खोजेको चीन-भारत प्लस सहकार्यको मोडलले कालान्तरमा नेपाल, चीन र भारतबीच त्रिदेशीय सहकार्यको क्षितिज उघार्छ या अझै केही समय पर्खनुपर्ने देखिन्छ ।

**परराष्ट्र नीतिको थप व्याख्या** : शीतयुद्धताका असंलग्न परराष्ट्र नीतिको अभियन्ता भएर पनि भारतजस्ता मुलुकले दुई ध्रुवीय विश्व व्यवस्थाका दुवै शक्तिबाट आफ्नो रणनीतिक हैसियत विस्तारका लागि आर्थिक लाभ लिन सके । तर नेपालजस्ता साना एवं मझौला शक्ति असंलग्न नीतिका पृष्ठपोषक मुलुकहरू उक्त प्रक्रियामा आर्थिक लाभ लिनबाट चुके । आजपर्यन्त भारत सोही प्रकृतिको नीतिलाई पक्षपोषण गर्दै आइरहेको छ । उदाहरणका लागि, अमेरिकासँग सम्बन्धलाई 'स्टाटेजिक कन्भरजेन्स' को जामा पहिराइदिएको छ भने चीनसँगको सम्बन्धलाई 'विकास साझेदार' का रूपमा व्याख्या गर्दै आइरहेको छ । बदलिँदो विश्व राजनीतिमा असंलग्न परराष्ट्र नीतिलाई निरपेक्ष रूपमा मात्र बुझेको खण्डमा नेपालको अन्तर्राष्ट्रिय सम्बन्ध खुम्चन पनि सक्छ । नेपालले असंलग्न परराष्ट्र नीतिको आधारभूत प्रस्तावनाबाट विचलित नभईकन 'रणनीतिक स्वायत्तता' को प्रयोगलाई सघन बनाउँदै लैजान आवश्यक छ ।

रणनीतिक साझेदारीको विकासको अवधारणाले नेपाल-चीन द्विपक्षीय सम्बन्धको आधारभूत प्रकृतिमा परिवर्तन माग गरेको छ । चीनसँग गरिने रणनीतिक साझेदार अमेरिकी रणनीति, आईपीएसभन्दा कसरी भिन्न परिभाषित हुन सक्छ ? चीनले एकअर्कालाई केवल छिमेकीका रूपमा मात्र नभई नेपाललाई एक भरपर्दो आर्थिक साझेदारका रूपमा हेर्न चाहेको देखिन्छ । चीनका लागि उसले वकालत गर्दै आएको नवोदित अर्थव्यवस्थाको एक महत्त्वपूर्ण सहयोगी बन्न सक्छ भन्ने बुझाइ पनि हुन सक्छ ।

नेपाल र चीनबीचको सम्बन्धमा विकसित घटनाक्रमलाई भारत र अमेरिकाले चासोपूर्वक हेरिरहेको सहजै अनुमान गर्न सकिन्छ । यद्यपि सीको नेपाल भ्रमण र यसबीचमा भएका सम्झौतालाई लिएर पहिलो पटक भारतीय धारणा मुखरित हिसाबले विभाजित भएको अनुभव गर्न सकिन्छ । अन्तर्राष्ट्रिय सम्बन्ध सञ्चालनमा नेपालको स्वतन्त्र छनोटलाई सम्मान गर्नुपर्छ भन्ने सोच भारतमा पनि बलशाली बन्दै गएको पाइन्छ । नेपाल र चीनबीचमा कायम सदाबहार असल सम्बन्धलाई रणनीतिक साझेदारका स्तरमा विकास गर्न खोजेबाट भारत वा अमेरिका सुरुमै सशंकित भइहाल्न जरुरी छैन । अनि, चीन र नेपालले गर्न चाहेको रणनीतिक साझेदारी भनेको बृहत्तर आर्थिक साझेदारी नै हो भने थप तरंगित हुन नदिन नेपालले कूटनीतिक कौशलको प्रयोग गरेर सम्बन्धित देशलाई आश्वस्त पार्न सक्नुपर्छ । त्यसमाथि, अबउप्रान्त नेपाल र चीनबीच कस्ता मुद्दामा नीतिगत समानता झल्कन्छ भन्ने कुराले पनि निर्धारण गर्नेछ ।

शीतयुद्ध अन्त्यपछि व्यापक प्रयोग हुने गरेको रणनीतिक साझेदारीलाई नेपालको सन्दर्भमा अर्थ-राजनीतिक चरित्रका रूपमा ग्रहण गर्नुपर्छ । अनि, नेपाल र चीनले विकास गर्न चाहेको रणनीतिक साझेदारीलाई बृहत्तर आर्थिक सहकार्यका मुद्दामा केन्द्रित गर्नुपर्छ । यस प्रकृतिको साझेदारीले आर्थिक उन्नति र विकासको सिँढी चढाउन सकेन भने दूरगामी असर सिर्जना गर्न पनि सक्छ । अनि, स्वयं नेपाल-चीन रणनीतिक साझेदारीको औचित्यमाथि गम्भीर प्रश्न खडा हुनेछ । ने

*ट्वीटर : @RupakSapkota*



# दूरगामी यात्रा, पुरानै एजेन्डा

**दीर्घकालीन प्रभाव राख्ने रणनीतिक समझदारीबाहेक नेपाल–चीन तत्काल लाभ लिने परियोजनामा उदासीन**

त्रिभुवन विमानस्थलमा प्रधानमन्त्री केपी ओली र चिनियाँ राष्ट्रपति सी चिनफिङ

**मनबहादुर बस्नेत**

साढे दुई दशकपछि बल्ल चिनियाँ राष्ट्रपतिलाई काठमाडौँले स्वागत गर्न पायो । २५ र २६ असोजमा दुई दिने नेपाल भ्रमणमा ओर्लिए, चिनियाँ राष्ट्रपति सी चिनफिङ । आतिथ्य र खातिरदारीमा नेपालले कुनै कसर बाँकी राखेन । बाटाघाटा रातारात सिंगारिए। पञ्चेबाजा, नेवारीलगायत विभिन्न जातजातिका परम्परागत बाजागाजाले सडक गुञ्जियो ।

सरकारले यस्तरी उत्सवमय बनाएको चिनियाँ राष्ट्रपतिको नेपाल भ्रमणका बखत हस्ताक्षरित द्विपक्षीय सम्झौता-समझदारीले ठूलो परिवर्तनको बाटो पक्रिहाल्न सकेको नदेखिए पनि यसको राजनीतिक सन्देश भने ठूलो छ।

चीनसँगको सम्बन्धमा पर्यायवाची शब्दकै रूप लिएको रेलमार्गसँग नेपाल कहिलेसम्म जोडिन्छ भन्ने किटानी त भएन नै, सामान्य लेखाजोखा लगाउन सक्ने आधारसमेत तय गरेन। रेलमार्ग निर्माणबारे सम्भाव्यता अध्ययन गरिने मात्रै समझदारी भयो। जबकि कम्तीमा विस्तृत परियोजना प्रतिवेदन (डीपीआर) बनाउने तहमा सम्झौता हुने नेपालमा धेरैले ठानेका थिए ।

चीनसँग रेलमार्गमार्फत जोडिएर कार्गोको व्यवस्था हुन सके नेपालको व्यापारिक हैसियत उकासिने मानिन्छ। ०७२ मा नेपाल विश्वबजारमा जोडिने चीनको महत्त्वाकांक्षी परियोजना बेल्ट एन्ड रोड इनिसियटिभ (बीआरआई) को हस्ताक्षरित सदस्य बनेसँगै रेलमार्ग जोडिने विषय तीव्र बहसमा आएको थियो ।

त्यसयता नेपाल-चीनबीच झन्डै आधा दर्जन उच्चस्तरीय भ्रमण भए पनि चीनसँग रेल सञ्जालमा जोडिनेबारे ठोस उपलब्धि हात नपरेकाले नेपालप्रति चीनको सन्देह कायमै रहेको देखाउँछ । यस अवधिमा नेपालबाट चीनमा प्रधानमन्त्री तहको भ्रमण तीन पटक र अहिले सी नेपाल आए । "लामो समयपछि भएको सर्वोच्च तहको भ्रमणमा यति समयभित्र रेलमार्ग बन्छ भनेर समझदारी बन्नुपर्ने हो," राजनीतिशास्त्री कृष्ण खनाल भन्छन्, "कार्यान्वयन गर्ने निकायबीच सम्भाव्यता अध्ययन वा डीपीआरबारे समझदारी हुन सक्थ्यो । रेलमार्ग निर्माणमा चीनको संशय प्रस्ट देखियो ।"

संशयका दुई कारण हुन सक्ने उनको जिकिर छ। पहिलो- भौगोलिक जटिलता चिरेर रेलमार्ग जोड्न सकिने-नसकिने अनिश्चितता। दोस्रो- भारतलाई नचिढ्याउन नेपालसँगको सम्बन्ध सोचीविचारी अगाडि बढाउने । "यसबाहेक रेलमार्ग निर्माणबारे मिति नतोक्नुको अर्को कारण हुनै सक्दैन," खनाल भन्छन् ।

०७२ असोजमा संविधान जारी भएलगत्तै त्यसैलाई देखाउँदै भारतीय नाकाबन्दी सुरु भयो। झन्डै पाँच महिनाको नाकाबन्दी सकिएको दुई महिनापछि चैतमा ओली चीन जाँदा दूरगामी असर गर्ने रणनीतिक महत्त्वका सम्झौता गरे। भारतीय एकल निर्भरता हटाउन ओलीले त्यसबेला चीनसँग पारवहन तथा व्यापार सम्झौता र रेलमार्ग निर्माणमा सहकार्यको समझदारी गरेका थिए, जसमध्ये प्रोटोकलमा गत वर्ष राष्ट्रपति विद्यादेवी भण्डारीको चीन भ्रमणका बेला हस्ताक्षर भइसकेको छ । प्रोटोकलमा हस्ताक्षर भएसँगै नेपालले चिनियाँ सामुद्रिक बन्दरगाह प्रयोगको सुविधा पाएको छ। यसले तेस्रो मुलुकसम्म व्यापारिक सम्बन्ध कायम गर्ने ढोका खोलिदिएको छ । रेलमार्ग बनाएर नेपाललाई भूपरिवेष्ठितबाट भूजडितमा परिणत गर्ने सीले नेपाल आएर वाचा गरिसकेका छन्। भलै, रेलमार्ग जोड्ने प्राविधिकलगायतका थुप्रै पाटा अनुद्घाटित नै छन् ।

रेलमार्फत चीनसँग जोडिने र पारवहन सुविधा पाउने सम्झौता भएपछि ०७४ को चुनावमा दुई तिहाइ बहुमत पाएर पुनः ओली सत्तामा आए, पाँच वर्ष शासन गर्ने गरी । दोस्रोपल्ट चीन गएका ओलीले पहिलोपल्टका समझदारीकै आलोकमा थप सम्झौता गरे । सीको हालैको नेपाल भ्रमणमा ओलीले पहिलो र दोस्रो चीन भ्रमणमा गरेकै समझदारीको निरन्तरता पाइन्छ ।

नेपाल र चीनबीच सुपुर्दगी सन्धि गर्ने सहमति ओलीको पहिलो भ्रमणताका भएको थियो, जसले दोस्रोमा पनि निरन्तरता पायो । सी नेपाल आउँदासमेत उक्त सहमति अटाएको छ। यसपालि भने पारस्परिक कानुनी सहायता गर्ने विषयलाई सन्धिको नाम दिइएको छ । साथै, यसअघि नै निचोडमा पुगिएको सुपुर्दगी सन्धि गर्नेमा आशावादी हुने भनेर व्याख्यासमेत गरिएको छ ।

मदन भण्डारी विश्वविद्यालय स्थापना गर्न चीनले सहयोग गर्ने विषय ओलीको पहिलो चीन भ्रमणमै उठेको थियो । नेपालको उत्तर-दक्षिण जोड्ने कोसी, गण्डकी र कर्णाली कोरिडर निर्माणमा चीनले सहयोग गर्ने विषय पनि यसअघिको समझदारी-सम्झौतामा समेत उठेको थियो ।

थुप्रै सम्झौता भए पनि कार्यान्वयन कसरी अगाडि बढ्छ भन्ने चुनौती बाँकी नै छ । खासगरी कुरा बढी गर्ने, काम नगर्ने नेपाली पक्षको प्रवृत्तिलाई चिनियाँ राष्ट्रपति सीले समेत कटाक्ष गरिदिए, भ्रमणका दौरानमा ।

## राष्ट्रपति हाबी

**सी आगमन क्रममा कार्यकारी प्रधानमन्त्री आलंकारिक राष्ट्रपतिको छायामा परेको देखिए। पहिलो घटना- चिनियाँ राष्ट्रपति सीको स्वागतार्थ नेपाली समकक्षी विद्यादेवी भण्डारी त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल पुगिन्। राष्ट्रपतिको पछाडि प्रधानमन्त्री केपी ओली सीलाई भेट्न विमानस्थल पुगे। राष्ट्रपति, उपराष्ट्रपतिपछि प्रधानमन्त्री ओली सीको स्वागतमा लाइनबद्ध भए। "कि त एयरपोर्टमा प्रधानमन्त्री जानु हुँदैन थियो। गएपछि उनी आफैँले 'रिसिभ' गर्नुपर्थ्यो। कार्यकारी प्रधानमन्त्रीले लाइन लागेर स्वागत गर्ने अनि राष्ट्रपति अगाडि बसेर स्वागत गर्ने कुरा दुनियाँका लागि आश्चर्यजनक भयो," राजनीतिशास्त्री कृष्ण खनाल भन्छन्।**

**मर्यादाक्रम आन्तरिक प्रयोजनका लागि भएकाले राष्ट्रपतिको पछाडि उभिएर कार्यकारी प्रधानमन्त्रीले सीको स्वागत गर्न जरुरी नभएको खनालको ठम्याइ छ। "मुलुकको प्रमुख त प्रधानमन्त्री हो नि," उनी भन्छन्।**

**दोस्रो घटना भयो- सोही साँझ शीतल निवासमा। राष्ट्रपति भण्डारी र सीले दायाँबायाँ आ-आफना् प्रतिनिधिमण्डल राखेर भेटवार्ता गरे। मानौँ, त्यहाँ दुई राष्ट्रबीच दुईपक्षीय वार्ता हुँदै छ। आलंकारिक राष्ट्रपतिसँग भएको शिष्टाचार भेटलाई दुई मुलुकबीच वार्ताको स्वरूप दिइएको थियो। "प्रधानमन्त्रीले राष्ट्रपतिलाई अधिकार प्रत्यायोजन गरेका थिए कि ?" व्यंग्यात्मक शैलीमा खनाल भन्छन्, "नभए आलंकारिक राष्ट्रपतिले कार्यकारीको भूमिका किन खेलेको ?"**



चिनियाँ समकक्षीसहितको प्रतिनिधिमण्डलसँग राष्ट्रपति विद्यादेवी भण्डारी शीतल निवासमा

बेइजिङको युनिभर्सिटी अफ इन्टरनेसनल बिजनेस एन्ड इकोनोमीबाट विद्यावारिधि कल्याण रोका दूरगामी असर पार्ने दुई मुलुकबीचका समझदारी-सम्झौता कर्मचारी तहबाट कार्यान्वयन नहुने समस्या रहेकाले त्यसको सट्टा छुट्टै संयन्त्र खाँचो पर्ने बताउँछन् । प्रधानमन्त्री कार्यालय वा परराष्ट्र मन्त्रालयअन्तर्गत त्यस्तो संयन्त्र बनाएर छरिएर रहेका सम्झौताको एकद्वार प्रणालीबाट कार्यान्वयन गर्नुपर्छ । "कर्मचारीकै जिम्मा छाडिदिने हो भने विभिन्न बहानामा समस्या अल्झाउने खतरा छ," उनी भन्छन् ।

### के चाहन्छ चीन ?

चीन-भारतबीच सन् २०१८ मा ९५ अर्ब अमेरिकी डलर बराबरको व्यापार भएको थियो । २०१९ मा यो आँकडा खर्ब डलर पुर्‍याउने चीनको लक्ष्य थियो । तर अमेरिकासँग चीनले व्यापार युद्धको सामना गर्नुपरेपछि यो लक्ष्यमा बाधा पुगेको छ । सन् २०१९ को पहिलो चार महिनामा भारतले चीनसँगको व्यापार घाटा १० अर्ब डलरले घटाएको छ । एकातिर वासिङ्टन र बेइजिङबीचको व्यापारिक द्वन्द्वको असर भारतसँगको व्यापारमा देखिएको छ भने अर्कोतिर अझै पनि भारत चीनदेखि सामान आयात गर्ने सातौँ ठूलो मुलुक हो । अर्थात्, चीनका लागि भारत अपरिहार्य बजार हो ।

समुद्री मार्गबाट मात्र भारतीय बजारमा चिनियाँ सामान पुग्ने गर्छ । तर ठूलो जनसंख्या भएको बिहार, उत्तर प्रदेश र पश्चिम बंगालमा समुद्री मार्गबाट भित्रिने चिनियाँ सामानले पकड जमाउन सकेको छैन, लामो दूरी पर्ने भएकाले अत्यधिक लागत बढ्ने हुँदा । नेपाल हुँदै रेलमार्गले भारत छोए ५० करोड जनसंख्या बसोबास गर्ने यो भूगोलमा सहजै चिनियाँ सामानको पहुँच बढ्छ । यसबाट आफूलाई हुने लाभ चीनले नकेलाउने कुरै हुँदैन । सोही कारण चीन नेपालको बाटो भएर भारतीय बजारको हिस्सेदार बन्न खोजिरहेको छ ।

नेपालसँगको हिमचिमकै कारण भारतीय बजार गुमाउने घातक कदम चीनले चाल्दैन । यसको प्रस्ट छनक सी भारतको बाटो भएर नेपाल ओर्लनुले देखाइसकेको छ । "दक्षिण एसियाली राजनीतिमा चीन एउटा गेम प्लान लिएर छिरेको छ । बंगलादेश, भुटानमा अहिले भारतीय प्रभाव घटिरहेको छ," कूटनीतिवेत्ता मिलन तुलाधर भन्छन्, "भारतलाई पनि साथमा लिएर चीन दक्षिण एसियाली मुलुकमा आफू लिड गर्न चाहन्छ । यस क्रममा ती मुलुकलाई भारतीय प्रभुत्वबाट फुत्काउने चीनको कोसिस हुनेछ । भुटानजस्तो मुलुकमा त चीनका कारण भारतले आफ्नो पकड खुस्काउँदै छ ।"

चीनले पटक-पटक नेपाललाई झकझक्याउने विषय हो, तिब्बत मामिला । यो मुद्दा यसपालिको भ्रमणमा पनि प्रतिबिम्बित हुन छुटेको छैन । बरु एक कदम अगाडि बढेर सीले ताइवान र हङकङको विषय नउचाल्न पश्चिमा राष्ट्रलाई नेपालबाटै चेतावनी दिए । सीले नेपाली भूमिलाई यसरी प्रयोग गरे कि, त्यही बेला चीन र अमेरिकाबीच व्यापार युद्धबारे वार्ता भइरहेको थियो । अमेरिकालाई दबाब दिन सीले अमेरिका स्वयंले रणनीतिक रूपमा महत्त्वपूर्ण मानेको नेपाली भूमि रोजे । यसबाट सीले प्रस्ट सन्देश दिएका छन्, नेपालमा चीन प्रकट रूपमै ओर्लिएको छ । नेपाल र चीनबीचको संयुक्त वक्तव्यमा ताइवान चीनको अभिन्न भूमि भएको स्वीकारिएको छ ।

सुरक्षा चासो चीनको मूल विषय हो । स्थानीयदेखि उच्च स्तरका द्विपक्षीय छलफलमा चीनले सीमा सुरक्षालाई प्राथमिकतासाथ उठाउँछ । आधारभूत प्रजातान्त्रिक मूल्य-मान्यताभन्दा बाहिरको व्यवस्थाबाट हासिल गरेको आर्थिक साम्राज्य कमजोर भए आफ्नो शक्ति क्षीण हुने चीनले बुझेको पूर्वप्रधानसेनापति गौरवशमशेर राणा बताउँछन् । "चीनका दुइटा स्वार्थ छन् । पहिलो- एक चीन । ताइवान, हङकङ, तिब्बती भूमि चीनबाट नटुक्रियोस् । दोस्रो- आन्तरिक सुरक्षा," राणा भन्छन्, "छिमेकतिरको विकास, सम्बन्धको कुरा यसैमा निहित छ ।"

नेपालमा चीन कति आक्रामक ढंगले अगाडि बढिरहेको छ भन्ने बुझ्न पर्यटकीय केन्द्र काठमाडौँको ठमेल क्षेत्र हेरे पुग्छ । ठमेलको एउटा सडक खण्डले आफ्नो पहिचान नै लगभग गुमाइसकेको छ । ज्याठा सडक अहिले 'चाइनिज लाइन' भनेर चिनिन्छ, जहाँ चिनियाँ व्यापारीले कारोबार गर्छन् । उनीहरूले त्यहाँ 'मिनी चाइना टाउन' खडा गरेका छन् । नेपाली नामलाई प्रतिस्थापित गरेर चिनियाँहरू व्यापारिक प्रयोजनका लागि मात्रै त्यहाँ बसोबास गर्छन् त ? नेपालमा व्यापार, व्यवसाय गरिरहेका चिनियाँको संख्या कति छ भन्ने यकिन अभिलेख सुरक्षा निकायसँग समेत छैन ।

नेपाल प्रहरीका प्रवक्ता प्रहरी नायब महानिरीक्षक विश्वराज पोखरेलका अनुसार प्रारम्भिक अभिलेख अध्यागमन विभागसँग हुन्छ । तर नेपाली सेनाका पूर्वरथी विनोज बस्न्यात नेपाल आएका विदेशी नागरिकको गतिविधि निगरानी गर्ने प्रणाली नहुँदा त्यसले आगतमा राष्ट्रिय सुरक्षामा खतरा आउने जोखिम देख्छन् । "चीन र पश्चिमा मुलुकबीच शक्ति संघर्ष मात्र होइन, नेपालमा एकले अर्कालाई रोक्ने दाउपेच पनि छ," बस्न्यात भन्छन्, "भोलि समस्या चुलिएपछि सुरक्षाका कुरा गर्नुभन्दा अहिल्यै सावधानी अपनाउनुपर्छ ।"

राष्ट्रिय अनुसन्धान विभागका एक



डीआईजीका अनुसार विभिन्न भेषमा चिनियाँहरू गुप्तचरीका लागि नेपालमा आएका छन्, जो व्यापारिक भेषमा बसिरहेका छन् । पश्चिमा नागरिकको बढी गतिविधि हुने ठमेलमै चिनियाँले अखडा जमाउनुले शंकाको सुविधा दिएको छ ।

## नेपाललाई त्रास

१४ र १५ वैशाख ०७५ मा भारत र चीनले अनौपचारिक बैठक थालनी गरे, चीनको उहान सहरबाट । एसियाली शताब्दी निर्माणमा अगाडि बढ्न तथा क्षेत्रीय विकास र समृद्धिका लागि सहकार्य गर्न चिनियाँ राष्ट्रपति सी र भारतीय प्रधानमन्त्री मोदीले उक्त अनौपचारिक बैठकबाट 'टु प्लस वान' नीतिको थालनी गरेका थिए । यसको अर्थ हो- तेस्रो पक्षबारे निर्णय गर्दा पहिले दुवै मुलुकले साझा धारणा बनाउने र सोहीअनुसार कदम चाल्ने ।

चीन र भारत मिलेर ल्याएको यो यस्तो अवधारणा हो, जसले नेपाल, भारत र चीनबीचको परम्परागत त्रिदेशीय सम्बन्धलाई अस्वीकार्छ । यसको सोझो अर्थ हो, सामरिक र आर्थिक रूपमा दुई शक्तिशाली छिमेकीको स्वार्थ मिले नेपालको हितमा प्रतिकूल अवस्था सिर्जित हुन सक्छ । संयोग कस्तो भने साँधसीमा जोडिएका शक्तिशाली दुई छिमेकी चीनपछि भारतमा दोस्रो अनौपचारिक बैठक सकाएर सी नेपाल ओर्लिए । अनौपचारिक भएकाले सी र मोदीबीच भएका छलफल सार्वजनिक हुने छैनन् । आगामी व्यवहारबाट बुझिनेछ ।

तर यी दुई बलवान मुलुक मिल्दा नेपालको राष्ट्रिय स्वार्थमा आँच पुग्ने क्रमबद्ध निर्णय भएका छन्, विगतमा । जतिखेर टु प्लस वानको अवधारणा जन्मिएकै थिएन । ०७२ वैशाखमा मोदीको चीन भ्रमणका क्रममा चीन र भारतबीच भएको एउटा सम्झौताले त नेपालको सार्वभौमिकतामाथि नै हमला गरेको थियो । मोदीको तीन दिने भ्रमणमा नेपाली भूमि लिपुलेक नाकामार्फत सीमा व्यापार बढाउने सहमति चीन र भारतले गरेका थिए ।

४१ बुँदे सहमतिको २२ औं बुँदामा 'दुवै पक्ष व्यापार वस्तुको सूची बढाउन, वार्ता गर्न र नाथुला, च्याङला, लिपुलेक नाका र सिप्लिकामा सीमा व्यापार बढाउन राजी भए' भनिएको छ । दार्चुलाको पश्चिम-उत्तर मोहडामा पर्ने लिपुलेक चीनसँग सीमा जोडिएको क्षेत्र हो । लिपुलेकभन्दा दक्षिणतिर तल कालपानीमा भारतीय अर्धसैनिक सुरक्षा अंग इन्डो-टिबेटियन बोर्डर पुलिसको क्याम्प झन्डै ६ दशकदेखि तैनाथ छ ।

नेपाली भूमिमाथि दुई छिमेकी मुलुकले संगठित आधिपत्य जमाएपछि यसविरुद्ध नेपालको संसद्मा समेत आवाज उठेको थियो । तर यो विषय पछि त्यत्तिकै सेलायो । लामो समयदेखि नेपाललाई पन्छाएर लिपुलेकमाथि चीन र भारतले एकलौटी समझदारी गर्दै आएका थिए । सन् १९९९ मा भारतीय विदेशमन्त्री जसवन्त सिंहको चीन भ्रमण हुँदा लिपुलेकलाई चीन र भारतको व्यापारिक नाका बनाउने समझदारी भएको थियो । नेपालले आपत्ति जनाएपछि नेपालस्थित चिनियाँ राजदूत जङ सुयाङले नेपाल र चीनबीच सीमा सम्झौता हुँदा लिपुलेक भन्ज्याङलाई त्रिदेशीय सीमा-बिन्दु मानिएकाले त्यसअनुसार कालापानी नेपालतर्फ पर्छ भन्ने प्रस्टोक्ति दिएका थिए ।

०६१ चैतमा चीन र भारतबीच भएको अर्को सम्झौतामा मध्य सेक्टरको लिपुलेक/च्याङलाभन्ज्याङ र पूर्वी सेक्टरको किविथ-दामाईलाई संलग्न गरी सीमा बैठक बिन्दुहरूको संयन्त्र विस्तार गर्न दुवै पक्ष सिद्धान्ततः सहमत भएको उल्लेख छ । यो सम्झौताले कालापानी क्षेत्रको भारतीय अतिक्रमणलाई चीनले मान्यता दिएको देखिन्छ । नेपालले प्रतिवाद गर्दै विज्ञप्ति निकालेपछि नेपालस्थित आफ्नो दूतावासमार्फत चीनले उक्त समझदारीमा उल्लिखित कुराले कालापानीबारे सरोकार नराख्ने जवाफ नेपाललाई पठाएको थियो ।

सन् २०१४ मा सीको भारत भ्रमण हुँदा फेरि अर्को समझदारी भयो । चीनमा रहेको धार्मिक स्थल मानसरोवर जान भारतीय तीर्थयात्रीका लागि नयाँ रुट खोल्न समझदारी भयो, जसमा नाथुला, लिपुलेकलाई सम्भावित रुट मानिएको थियो । मोदीको चीन भ्रमणले यसअघिका सबै प्रयासलाई साकार पारिदियो, लिपुलेकलाई चीन र भारतले व्यापारिक नाकाका रूपमा प्रयोग गर्ने सहमति गरेसँगै ।

विचित्र त के भयो भने लिपुलेक क्षेत्रमार्फत हुने आवतजावतलाई चीनले नै रोकेको थियो, स्वतन्त्र तिब्बत पक्षधर यो बाटोबाट ओहोरदोहोर गरेको भन्दै खम्पा विद्रोहपछि चीन सरकारले आगमनका लागि स्वीकृत लिनुपर्ने प्रावधान लागू गरेको थियो । सामरिक महत्त्वको नाका प्रयोग गर्न भारतलाई दिन चीन राजी हुनुले आफ्नो स्वार्थसामु छिमेकीको हित मिथ्या हुने देखाउँछ । "घोषित रूपमै टु प्लस वान आएपछि नेपाल बढी सजग हुनुपर्ने अवस्था आएको छ," कूटनीतिज्ञ तुलाधर भन्छन्, "हामी बराबरीको हैसियतमा त्रिदेशीय सहकार्यबाट अन्यत्र लाग्नु हुँदैन । हामीलाई अन्धकारमा राखेर हामीविरुद्ध हुने मोर्चाबन्दीको सरकारले डटेर सामना गर्नुपर्छ ।"

भनिन्छ, कूटनीतिमा 'मुलुकको स्वार्थ हुन्छ, दिल हुँदैन ।' बन्द-समाजबाटै विश्वको अग्रज राजनीतिक खेलाडी बनेको चीन पक्कै पनि आफ्ना राष्ट्रिय स्वार्थ बोकेर प्रकट रूपमै नेपाल छिरिरहेको छ । नेपाल पनि अहिले चीनप्रति ठूलो भरोसा बोकेर अगाडि बढ्न खोजेको त छ, दक्षिणी छिमेकीको कुटिल व्यवहारबाट मुक्ति पाइयोस् भन्ने हेतुले । "चीन वा कुनै पनि मुलुकले हामीलाई माया गर्ने होइनन् । हाम्रो विशिष्ट भौगोलिक अवस्थितिले माया पाएजस्तो हुने हो," पूर्वप्रधानसेनापति राणा भन्छन्, "शक्ति मुलुकको संघर्षबाट बचेर गोटी चाल्नुपर्छ ।" ने

# १८ महिना, १८ प्रयास

## नेपालका लागि अहिले राजनीतिक कुशलता र कूटनीतिक परीक्षाको घडी



बेलायती प्रधानमन्त्री थेरेसा मेसँग समकक्षी केपी ओली

**योगेश ढकाल**

केपी ओली ०७२ मा पहिलो पटक प्रधानमन्त्री निर्वाचित भएसँगै चिनियाँ राष्ट्रपति भ्रमणको प्रयास जारी थियो। तर नेपालको आन्तरिक किचलोले सी चिनफिङको भ्रमण पर सर्दै गयो।

०७४ को निर्वाचनपछि सुरु राजनीतिक स्थिरताले सीको भ्रमण मात्र निश्चित गरेन, १७ वर्षपछि पुस ०७५ मा नेपाली समकक्षीलाई अमेरिकी विदेशमन्त्री माइक पोम्पियोको निमन्त्रणा पनि आयो। त्यसबाहेक जापानी विदेशमन्त्री तारो कानोको नेपाल भ्रमण होस् वा प्रधानमन्त्री ओलीको युरोप यात्रा। त्यसको पृष्ठभूमिमा राजनीतिक स्थिरता छ।

विश्वमञ्चमा नेपाललाई बिस्तारै 'भिजिवल' बनाउनेमा ओली सरकार स्वयं पनि प्रयासरत देखिन्छ। नेपाल दुइटा एजेन्डामार्फत अन्तर्राष्ट्रिय मञ्चमा नेतृत्व गर्ने प्रयासमा छ। पहिलो- जलवायु परिवर्तन। दोस्रो- महिला सहभागिता। जलवायु परिवर्तनको एजेन्डामा विश्वलाई नेतृत्व गर्ने मनोकांक्षाकै प्रतिफल सरकार आउँदो अप्रिलमा 'सगरमाथा संवाद' गर्दै छ। नेपाललाई अन्तर्राष्ट्रिय मञ्चमा सुनिने र देखिने बनाउनकै लागि त्यो अवधारणा ल्याइयो। र, एजेन्डाका रूपमा पनि जल्दोबल्दो मुद्दा जलवायु परिवर्तनलाई रोजियो। त्यसबाहेक सरकार विश्वलाई नेपाली मौलिक मोडलमा टुंगिएको शान्ति प्रक्रियाको अनुभव पनि सुनाउन चाहन्छ।

जलवायु परिवर्तनको मुद्दामा नेतृत्व गर्न खोजेको पोषणसम्बन्धी अन्तर्राष्ट्रिय कार्यक्रम गरेर अर्को सन्देश दिने प्रयत्नमा छ। संयुक्त राष्ट्रसंघको पोषण विस्तार अभियानअन्तर्गतको कार्यक्रम गर्न एसियाबाट इन्डोनेसियाले पनि प्रयत्न गरेको थियो। तर त्यहाँको राजनीतिक प्रतिबद्धता कमजोर देखेको संयुक्त राष्ट्रसंघले कार्यक्रम नेपालमा गर्ने निर्णय गरेसँगै १८-२१ कात्तिक ०७६ मा हुँदै छ। प्रधानमन्त्री ओलीले १० भन्दा बढी देशका सरकार प्रमुख तथा राष्ट्र प्रमुखलाई निम्ता गरेका छन्।

१७ वर्षपछि नेपाल-अमेरिका सम्बन्धमा प्रगति भइरहेको छ। र, नेपाल यही बेला रुससँग पातलिएको सम्बन्ध कसिलो बनाउने प्रयत्नमा छ, जसका लागि केही समयपछि परराष्ट्रमन्त्री रुस भ्रमणमा निस्कँदै छन्। शक्तिराष्ट्रसँगको पुरानो सम्बन्धलाई पुनर्ताजगी गर्ने मात्र होइन, नयाँ सम्बन्ध विकसित गर्ने प्रयास पनि देखिन्छ।

कूटनीतिज्ञ शम्भुराम सिंखडाको विश्लेषणमा ०७२ मा संविधान जारी भएसँगै नेपालको राजनीतिमा तेस्रो छाल सुरु भयो।

"नेपालसँग अन्तर्राष्ट्रिय मञ्चमा सेयर गर्नुपर्ने केही छैन भनेर खुम्चिनुपर्ने अवस्था छैन," परराष्ट्रमन्त्री प्रदीप ज्ञवाली भन्छन्, "जलवायु परिवर्तन र महिला सहभागिताको मुद्दामा नेपालले नेतृत्व गर्ने प्रयास गर्छ।"

राजनीति संक्रमणका कारण भारत, चीनसँग पनि लामो समय उच्चस्तरीय भ्रमण भएका थिएनन्। छिमेकीसँग सम्बन्ध औपचारिक मात्रै थियो, जुन ०७४ को निर्वाचनपछि बिस्तारै तोडिँदै छ र बाह्य विश्वसँग पनि सम्बन्ध विस्तारित हुँदै छ।

सम्बन्धको सामर्थ्य कतिसम्म हुन्छ भन्नलाई ३० वर्षअघि नेपालको विश्व सम्बन्ध हेर्दा पुग्छ। भारत भर्खर स्वतन्त्र भएकै बेला उसको असन्तुष्टिका बाबजुद सन् १९६८-१९६९ मै नेपाल संयुक्त राष्ट्रसंघको सुरक्षा परिषद्को अस्थायी सदस्य राष्ट्रमा निर्वाचित भयो। जतिबेला चीनले पनि गर्विलो उपस्थिति पाइसकेको थिएन,



अन्तर्राष्ट्रिय मञ्चहरूमा ।

त्यही विरासतलाई नेपालले सन् १९८८-८९ मा दोहोऱ्याउने अवसर पायो । त्यसबेला विश्वका शक्तिराष्ट्रहरू सोभियत युनियन, जर्मनी, फ्रान्स, बेलायत, अमेरिका, जापानसँग नेपालको सम्बन्ध कसिलो थियो । र, ती देशसँग उच्चस्तरीय राजनीतिक भ्रमण भइरहेकै थिए ।

एक दशकयता नेपालको उपस्थिति अन्तर्राष्ट्रिय मञ्चमा कमजोर मात्र होइन, लज्जास्पद हुन थालिसकेको थियो। दुई पटक सुरक्षा परिषद्को अस्थायी सदस्य राष्ट्रमा निर्वाचित नेपालको साख तीन दशकमा कतिसम्म खस्केको रहेछ भन्ने उदाहरण त सन् २०११ को एक सन्दर्भले देखाइदिन्छ ।

संयुक्त राष्ट्रसंघ महासभाको अध्यक्ष एसिया महादेशको पालोमा थियो । चीन र भारतको समर्थनमा कुलचन्द्र गौतमलाई अगाडि सारेर नेपालले उम्मेदवारी दिए पनि अन्तर्राष्ट्रिय प्रभाव र पहुँचसामु पराजित भयो। कूटनीतिज्ञ मिलन तुलाधरका अनुसार नेपाल महासभाको अध्यक्ष र सुरक्षा परिषद्को अस्थायी सदस्यमा निर्वाचित भइदिएको भए अन्तर्राष्ट्रिय मञ्चमा नेपालको उच्च पद हुन्थ्यो ।

सामरिक संवेदनशीलता गहिरिँदै गएका बेला परिपक्व कूटनीति अपेक्षित हुन्छ । र, त्यो बेला नै हो, अन्तर्राष्ट्रिय मञ्च प्राप्तिको अवसर। यस्तै बेला कूटनीति कला प्रदर्शित हुने बुझेर हुन सक्छ, ओली सरकार शक्तिराष्ट्रको अपेक्षा र सामरिक महत्त्वलाई उपयोग गर्न खोजिरहेको छ। सरकार विदेश नीतिमा प्रस्टता ल्याएर अन्तर्राष्ट्रिय समुदायसम्म पुगिरहेको छ। "राष्ट्रपति, प्रधानमन्त्री र परराष्ट्रमन्त्रीका निरन्तरका विदेश भ्रमण तथा अन्तर्राष्ट्रिय समुदायबाट हुन थालेका भ्रमण नेपालको फैलावटको प्रतिविम्ब हो," प्रधानमन्त्रीका परराष्ट्र सल्लाहकार राजन भट्टराई भन्छन्, "अन्तर्राष्ट्रिय समुदायले पनि नेपालप्रतिको हिजोको धारणा परिवर्तन गर्न थालेका छन् ।"

ओली सरकार नेपाल-चीन सम्बन्ध र नेपाल-भारत सम्बन्ध सन्तुलनतिर लागेको छ। अमेरिका पनि नेपाललाई हिजोभन्दा प्रभावमा राख्न खोजेको देखिन्छ । भट्टराई जापानी विदेशमन्त्री तारो कानोको नेपाल भ्रमण होस् वा प्रधानमन्त्री ओलीको कोस्टारिकासम्मको भ्रमणलाई फैलावटकै प्रयासका रूपमा व्याख्या गर्छन् ।

त्यसबाहेक प्रधानमन्त्रीले चीन र भारतभन्दा बाहिर निस्कने प्रयासमा दक्षिणपूर्वी एसियाका कम्बोडिया, भियतनाम भ्रमण गरे । राष्ट्रपति विद्यादेवी भण्डारी पोल्यान्ड, कतारसम्म पुगेकी थिइन्। अहिले म्यानमार र जापान भ्रमणमा छिन्। २५ वर्षपछि जापानसँग हवाई उडान पुनरावलोकन र अस्ट्रेलिया तथा कम्बोडियाबीच सीधा हवाई उडानसम्बन्धी नयाँ सम्झौता अन्तर्राष्ट्रिय समुदायसम्म सम्पर्क विस्तारमा केन्द्रित देखिन्छ ।

३०-३१ भदौ ०७५ को बिमिस्टेक सम्मेलन ओली सरकारका लागि पहिलो अवसर थियो, नयाँ सरकार गठनसँगै। निकै महत्त्वपूर्ण त्यो सम्मेलनले नेपालको साख त बढाएकै थियो। तर सार्कलाई प्यारालाइज गराएको टिप्पणी पनि सँगसँगै भयो। भारत-पाकिस्तानको सम्बन्धमा उत्पन्न दरारले सार्क कोमामा पुगेको छ। र, नेपाल अध्यक्ष राष्ट्र भएकाले सक्रिय बनाउने चुनौती पनि छ। त्यही बुझेर ९ असोज ०७६ मा नेपालको गतिलो प्रयास थियो, न्युयोर्कमा सार्कका विदेशमन्त्रीको साइडलाइन वार्ता ।

२० साउनमा भारतले जम्मु कश्मीरको संवैधानिक विशेषाधिकार कटौती गरेपछि भारत-पाकिस्तान सम्बन्ध चिसिँदै छ । अन्तर्राष्ट्रिय मञ्चमा आरोप-प्रत्यारोप चलिरहेको छ। दुई देशबीच पानी बाराबार भएका बेला ८ वटै देशका विदेशमन्त्रीलाई न्युयोर्कमा वार्ता गरायो, नेपालले। भलै, भारतीय र पाकिस्तानी विदेशीमन्त्री एकसाथ बैठकमा सहभागी भएनन् तर बैठक बहिष्कार पनि गरेनन् ।

पुस ०७५ मा अमेरिकी विदेशमन्त्री माइक पोम्पियोको निमन्त्रणमा परराष्ट्रमन्त्री प्रदीप ज्ञवाली अमेरिका भ्रमणमा निस्किए । अमेरिकाले हिन्द-प्रशान्त रणनीतिमा नेपालको आबद्धताको अपेक्षा मात्र राखेन, केन्द्रीय भूमिका होस् भन्ने प्रस्ताव अद्यापि छ। तर नेपालमा उक्त रणनीति विवादित भएपछि अमेरिका नै बोली फेर्न बाध्य भएको छ।

ज्ञवालीको भ्रमणपछि निरन्तर अमेरिका उच्चस्तरीय संवादमा रह्यो । र, सुरक्षासँग जोडिएका मझौला भ्रमण भइरहे । १७ वर्षपछि नेपाल-अमेरिकाबीचको उच्चस्तरीय भ्रमणलगत्तै प्रधानमन्त्री ओली २५ जेठ ०७६ मा १ असारसम्मको साताव्यापी बेलायत र फ्रान्स भ्रमणमा निस्किए। बेलायत हुँदै फ्रान्सको यात्रा गर्ने जंगबहादुर राणापछि ओलीलाई अवसर जुरेको थियो ।

त्यही बेला बेलायतको अक्सफोर्ड विश्वविद्यालयमा सम्बोधन गर्ने अवसर पनि पाए, ओलीले । *बीबीसी* टेलिभिजनमा अन्तर्वार्ता दिए । भलै, प्रधानमन्त्रीमा पर्याप्त गृहकार्य देखिएन। २८ जेठ ०७६ मा बेलायती प्रधानमन्त्री टेरेसा मेसँगको भेटवार्ताले ठोस उपलब्धि त दिएन। तर बेलायतमा नेपालको उपस्थिति धेरै वर्षपछि भएको हो ।

ओलीको फ्रान्स भ्रमण अवसर नेपालबाट ३५ वर्षपछि जुरेको हो। फ्रान्सबाट फ्राइकोइस मितेराँले सन् १९८३ मा नेपालको भ्रमण गरेयता उच्चस्तरीय भ्रमण भएको छैन । यसबीचमा फ्रान्स नेपालसँग धेरै नजिक बस्न रुचाएको देखिएको थिएन । केही वर्ष पहिले नेपालस्थित आफ्नो दूतावास नै हटाउने तयारी गरेको थियो ।

भारतका लागि राजदूतमा नीलाम्बर आचार्य नियुक्त हुँदै गर्दा ओलीको बुझाइ शक्तिराष्ट्रलाई सन्तुलन र विश्वासमा लिन परिपक्व नेतृत्व पठाएको चर्चा थियो। ओली राष्ट्रपति कार्लोस अल्भारादोको निमन्त्रणामै १३ असोज ०७५ मा कोस्टारिका पुगे । उनी कोस्टारिका भ्रमण गर्ने पहिलो नेपाली प्रधानमन्त्री भए ।

स्थिर सरकारको आर्थिक नीति प्रवर्द्धन गर्ने गतिलो मञ्च थियो, डाबोस। ६-१२ माघ ०७५ मा ओली डाबोसका लागि स्वीट्जरल्यान्ड पुगे र तीन वटा सत्रमा भाग लिए। एक हदसम्म नेपाल अन्तर्राष्ट्रिय लगानीकर्ताका लागि लाभदायी मुलुक भनेर प्रवर्द्धन गर्न वामपन्थी सरकारलाई गतिलो अवसर थियो । ने



"अन्तर्राष्ट्रिय समुदायले पनि नेपालप्रतिको हिजोको धारणा परिवर्तन गर्न थालेका छन् ।

– राजन भट्टराई
प्रधानमन्त्रीका परराष्ट्र सल्लाहकार

# रणनीतिक साझेदारीको नखु

सी चिनफिङ नेपालको दुई दिने भ्रमण सकेर फर्केका छन्। २३ वर्षपछिको राजकीय भ्रमणले दुई देशबीच विश्वासको वातावरण अझ गाढा बनाउँदै सम्बन्धमा नयाँ आयामको थालनी हुने सम्भावना देखाएको छ। चीनजस्तो शक्तिशाली राष्ट्रका प्रमुखको भ्रमणलाई सुखद पक्षको रूपमा लिनुपर्छ। आजको चीन सन् १९९० को दशकको होइन। आज उसले विश्व राजनीतिलाई नेतृत्व दिने क्षमताको अभिवृद्धि गरेको छ।

चीनले आफ्नै तरिकाबाट विश्व राजनीतिमा आर्जन गरेको स्थान सबैका लागि उदाहरणीय बन्न पुगेको छ। उसले छोटो समयमा ठूलो जनसंख्यालाई गरिबी र पछौटेपनको चक्रव्यूहबाट मुक्त गर्न सफल भएको छ। आज चीन विश्व अर्थतन्त्रको २३ प्रतिशतभन्दा बढी हिस्सा ओगट्छ। विद्यमान आर्थिक वृद्धिदरलाई मात्रै कायम गर्न सक्यो भने ऊ छिट्टै आर्थिक, राजनीतिक र सामरिक रूपमा आफूलाई विश्व मानचित्रमा सशक्त रूपमा उभ्याउन सफल हुने निश्चित छ। आज चीनको सबभन्दा ठूलो चुनौती भनेको आर्थिक र जनसंख्या वृद्धिदरबीच सन्तुलन कायम राख्न सक्नु हो। अहिलेको आर्थिक वृद्धिदर कायमै राख्न उसले विश्व बजारमा आफूले उत्पादन गरेका वस्तु र सेवा निरन्तर प्रवाह गर्न सक्नुपर्छ। यी वस्तु र सेवा उत्पादनका लागि चाहिने साधनस्रोत सजिलै उपलब्ध हुन अति आवश्यक छ।

यी सबैको सन्तुलित व्यवस्थापनका लागि पछिल्ला वर्षमा विभिन्न परियोजनामार्फत चीनले संसारभरि ५० अर्ब डलरभन्दा लगानी पनि गर्दै आएको छ। लगानी बढाउन नयाँ-नयाँ बजार र ठाउँको खोजीमा भौतारिएको छ। साथै, चीन यसका लागि चाहिने उपयुक्त प्रविधि र पूर्वाधारको विकासमा भगीरथ तल्लीन छ। चीनको अर्थतन्त्रको मुख्य आधार नै 'बजार' र 'व्यापार' हो। आजको चीन न साम्यवादमा विश्वास गर्छ, न त समाजवादमा। उसको दर्शनको धरोहर बजारिया पुँजीवादमा आधारित छ। यसको प्राप्तिका लागि उसले दोस्रो विश्वयुद्धपछि युरोपमा लागू गरिएको मार्सल प्लानभन्दा पनि ठूलो परियोजना बेल्ट एन्ड रोड इनिसिएटिभलाई सिग्नेचर योजनाको रूपमा अगाडि सारेको छ। यो उसको एउटा रणनीतिक संयन्त्र हो, जसको प्रमुख उद्देश्य बढीभन्दा बढी भू-भाग र मानिसलाई आफ्नो सन्जालमा ल्याउनु। यही उद्देश्यअनुसार चीनले एसिया, युरोप र अफ्रिकाका मुलुकमा प्रस्तावित विभिन्न परियोजनालाई द्रुत गतिमा अगाडि बढाउन 'आक्रामक कूटनीति' अपनाएको



चन्द्रदेव भट्ट

देखिन्छ। नेपालमा हालै भएका उच्च भ्रमण चीन आफैँले सुरु गरेका प्रयासको सार्वजनिक वैधानिकता (आन्तरिक र बाह्य) हासिल गरी निर्विवाद रूपमा अगाडि बढ्नु हो। चीनका राष्ट्रपति यति लामो अन्तरालपछि आउनुमध्ये यो एउटा प्रमुख कारण हो। सीले भ्रमण दौरान 'ट्रान्स हिमालयन कनेक्टिभिटी नेटवर्क' लगायत विषयमा सम्झौता सम्पन्न भएका छन्। दुई देशबीच भएका २० बुँदे सम्झौता र १४ बुँदे संयुक्त विज्ञप्तिमा मुखरित बिन्दु कार्यान्वयन भए तिनको नेपाली समाज, राजनीति, छिमेक तथा अन्तर्राष्ट्रिय सम्बन्धमा गहिरो पदचाप पर्न जाने निश्चित छ।

चीनसँग भएका सम्झौतालाई दुई भागमा बाँड्न सकिन्छ। पहिलो- भौतिक पूर्वाधार निर्माण। दोस्रो- नरम शक्तिको प्रक्षेपण। यी दुवैको सहयोगबाट चीन नेपालसँग रणनीतिक साझेदारीको विकास गरी आफ्नो सुरक्षा प्रत्याभूति चाहेजस्तो देखिन्छ। चीनसँग भएका पछिल्ला सम्झौताको सबभन्दा ठूलो उपलब्धि नेपाल भूपरिवेष्ठितबाट भूजडित राष्ट्रमा रूपान्तरण हुने अवसर हो। किनभने प्रमुख प्राथमिकता 'कनेक्टिभिटी' भएकाले चीनले उत्तर-दक्षिण निशाना बनाएर नाकाहरू खोल्ने (रेल, सुरुङ र सडकमार्फत) अभियान अगाडि सारेको पाइन्छ। यो नेपालका लागि सुखद पक्ष हो। सायद भोलिका दिनमा नेपालले हिजोजस्तो नाकाबन्दीबाट पीडित हुनुपर्ने छैन। तर हाम्रा लागि मुख्य चासो आर्थिक उन्नति र भारत-चीनकेन्द्रित परनिर्भरता न्यूनीकरणको विषय पनि हुनुपर्ने हो, जुन अहिलेको अवस्थामा त्यति सम्भव देखिँदैन। अहिले भएका सम्झौताले भारतमाथिको परनिर्भरतालाई केही हदसम्म भए पनि कम गर्न सहयोग पुऱ्याउला तर चीनमाथिको परनिर्भरताचाहिँ बढेर जानेछ। किनकि सम्झौतामा प्रस्तावित लगानी न रोजगारीमूलक छन्, न त पुँजी निर्माण गर्न सहयोग पुऱ्याउनेछन्। केचाहिँ सत्य हो भने हामी उत्तर र दक्षिण दुवैको उपभोक्तामा परिणत भइसकेका छौँ। र, चीनकेन्द्रित कनेक्टिभिटीले उपभोक्ता बन्ने प्रक्रियालाई थप सघन बनाउनेछ। त्यसैगरी जुन हिसाबले भूजडानको प्रक्रिया अगाडि बढ्दै छ, यसले शिव-पार्वती र ऋषिमुनिहरूको तपस्या गर्ने हिमालय क्षेत्र भोलिका दिनमा सिमानाको सट्टा अन्तर्राष्ट्रिय रणनीतिको क्रीडास्थल हुने सम्भावना बढेर गएको छ। किनभने त्यो हिमालय फ्रन्टिएरबाट फोरन पोलिसीको प्रतिस्पर्धी क्षेत्रमा रूपान्तरित हुँदै छ। अर्को पक्ष, हिमालय क्षेत्र आवतजावतका लागि जति खुकुलो हुन्छ, विशेषगरी भारतले त्यति नै



# लेको पाटो

रणनीतिक साझेदारीको मुख्य उद्देश्य नेपाललाई चीनतिर फर्काउने हो । चीनले यो रणनीतिक साझेदारीको प्रस्ताव राख्नुका पछाडि ठूलो कारण छ ।

असुरक्षित महसुस गर्नेछ । यसले भारतलाई प्रतिरक्षात्मक कदम चाल्न बाध्य गराउनेछ ।

चीन, नेपाल र भारतजस्तै सभ्यतामूलक (सिभिलाइजेसनल) राष्ट्र हो, राष्ट्र-राज्य (नेसन स्टेट) होइन । चीनले आफ्नो वैधानिकता समाजबाट आर्जन गर्छ । पछिल्ला वर्षमा चिनियाँ समाजका विभिन्न माग र आवश्यकता परिपूर्ति गर्न माथि भनेजस्तै ऊ बजारिया पुँजीवाद अँगाल्न बाध्य भएको छ । आज आएर उसले प्रत्येक क्षेत्रलाई बजार र व्यक्तिलाई उपभोक्ताको रूपमा मात्रै देख्छ । अर्थशास्त्रको भाषामा भन्ने हो भने दुवैलाई वस्तु र मुनाफाको दृष्टिकोणले हेर्ने गर्छ । जब जीवित र निर्जीव दुवैलाई वस्तुको रूपमा हेर्ने गरिन्छ, त्यहाँ भावनाको स्थान कमजोर भएर जान्छ । त्यसैगरी छिमेकीको सम्बन्ध जब रणनीतिक साझेदारीमा रूपान्तरित हुन्छ, यसले कुनै पनि बेला अप्ठ्यारो निम्त्याउन सक्छ । किनभने रणनीतिक साझेदारीलाई आफ्नो सुविधाअनुसार व्याख्या गर्न सकिन्छ । जसरी केही वर्षअगाडि नाकाबन्दीका बेला भारतीय-नेपाली भाइ-भाइको केही अर्थ रहेन । चिनियाँ-नेपाली भाइ-भाइको पनि त्यो हबिगत नहोला भन्न सकिन्न । चीन र नेपालबीच सदियौं पुरानो सम्बन्ध हुँदाहुँदै पनि नेपाल आजको भूगोलमा खुम्चिनुका पछाडि प्रमुख दुई सन्धि हुन् । पहिलो- चीन र नेपालबीच बेत्रावती सन्धि, जसले नेपाल उत्तरबाट खुम्चिन गयो । दोस्रो- सुगौली सन्धि, जसले नेपाल दक्षिणबाट खुम्चिन गयो । राज्य-राज्यको सम्बन्धमा भावनाको स्थान दिगो हुन सक्दैन । दुई देश भएपछि स्वार्थ स्वभावैले फरक हुन्छन् ।

चीनसँग हालै सम्पन्न सम्झौताका धेरैजसो बुँदाले नेपालको भन्दा चीनको रणनीतिक र सुरक्षा स्वार्थसिद्ध गर्न मद्दत पुऱ्याउनेछन् । जसले जसरी व्याख्या गरे पनि रणनीतिक साझेदारीको मुख्य उद्देश्य नेपाललाई चीनतिर फर्काउने हो । चीनले यो रणनीतिक साझेदारीको प्रस्ताव राख्नुका पछाडि ठूलो कारण छ । किनभने ०६२/०६३ को राजनीतिक परिवर्तनपछि उसले नेपालमा विश्वासिलो राजनीतिक सहकार्य गर्न सक्ने पात्र भेट्टाएन । नेपालको राजनीतिक केन्द्र दिनप्रतिदिन कमजोर हुँदै गयो । नेपाल राजनीतिको क्रीडास्थल हुन पुग्यो । राष्ट्रपति सीले आफ्नो भ्रमणका दौरानमा काठमाडौँमा चीनविरोधी र चीनलाई टुक्र्याउन खोज्नेलाई लक्षित गरेर दिएका अभिव्यक्ति ज्यादै गम्भीर छन् । अर्काको देशमा राजनीतिक भ्रमणको बेलामा यस्ता अभिव्यक्तिको अर्थ महत्त्वपूर्ण हुन्छ । यी सबैको असर कालान्तरमा चीनले आफ्नो सुरक्षामा पनि पर्ने महसुस गरेपछि उसले नेपालमा आफ्नो प्रत्यक्ष उपस्थिति खोज्यो । समाजका विभिन्न वर्ग-समुदायसँग अन्तरक्रिया बढायो । यी अन्तरक्रिया राजनीतिक दल, शिक्षण संस्थान, सामाजिक संघसंस्था, सुरक्षा निकाय तथा कर्मचारीतन्त्रसम्म पुग्यो । यो अन्तरक्रिया संयन्त्र सर्वसाधारणसम्म पुऱ्याउन उसले हालै स्वयंसेवकको योजना अगाडि सारेको छ । योभन्दा पनि महत्त्वपूर्ण पक्ष उसले यहाँका राजनीतिक दलहरूलाई वैचारिक रूपमा पनि प्रभावित गर्न 'सी चिनफिङ विचारधारा' अगाडि सारेको छ । यी सबै प्रयासको अर्को उद्देश्य चीन आर्थिक र राजनीतिक रूपमा प्रभुत्व कायम गर्न छिमेकी र मित्र राष्ट्रहरूमाथि सकेसम्म उसकै जस्तो राजनीतिक र विकासको मोडल लागू गरेर सहकार्य स्थापना गर्न चाहन्छ । त्यसका लागि ऊ अरू राष्ट्रका सरकारलाई पनि 'राजनीतिक वैधानिकता' प्रदान गर्दै छ । हाम्रो सन्दर्भमा पनि यो कुरा लागू हुन जान्छ । तर यो तरिका चीनले मात्र अवलम्बन गरेको भने पक्कै होइन । पश्चिमा राष्ट्रहरूले पनि यही प्रक्रिया अपनाएर विश्वमा राजनीतिक र आर्थिक प्रभुत्व स्थापित गरेर आफ्नो सुरक्षा प्रत्याभूति गरे । उदाहरणका लागि, अमेरिकाले सन् १९६० र ७० को दशकमा नेपालमा स्वयंसेवक पठाएर 'नरम शक्ति' को विस्तार गरेको थियो । साँच्चै भन्ने हो भने कुनै पनि राष्ट्रलाई आफ्नो पक्षमा स्थायी रूपमा ल्याउन सामाजिक इन्जिनियरिङ र वैचारिक मतैक्य र साधन-स्रोतमाथिको नियन्त्रण महत्त्वपूर्ण मानिन्छ । सुशासन, विकासको बहस, शिक्षा र स्वास्थ्यमा लगानी, सांस्कृतिक आदान-प्रदान (एकतर्फी) गरिने लगानीको प्रमुख उद्देश्य नै सामाजिक इन्जिनियरिङको माध्यमबाट नरम शक्तिको विकास गर्ने हो । अहिलेका सम्झौताले चीनलाई 'हार्डवेयर र सफ्टवेयर' दुवैमा लगानी गर्न उपयुक्त वातावरण निर्माण गरेको छ ।

भीष्मपितामहले अन्तिम समयमा युधिष्ठिरसामु राजनीतिको व्याख्या गरेजस्तै चीनका राष्ट्रपतिले नेपालका वामपन्थी नेताहरूलाई राजनीति र शासन-सत्ताको जुन व्याख्या गरे, त्यो मननीय छ । सायद उनी नेपाली राजनीतिज्ञप्रति त्यति विश्वस्त नभएर त्यो उपदेश दिएका होलान् । पदार्थबाट मात्र चेतना लिने हाम्रा नेताहरूलाई महाभारतबाट उपदेश लिन अप्ठेरो पर्नु स्वाभाविकै हो । तर विश्व कम्युनिस्टका सबैभन्दा शक्तिशाली नेताको सन्देशबाट चेतना लिन सके यो देशको भलो नै हुनेछ । अरूका जस्तै चिनियाँ सहयोगका पनि आफ्नै स्वार्थ छन्, जुन स्वाभाविक पनि हो । तर चीनलाई भारतको विकल्प र भारतलाई चीनको विकल्पको रूपमा प्रस्तुत गर्नु बुद्धिमानी हुँदैन । एउटा छिमेकीले अर्कोलाई प्रतिस्थापना गर्न सक्दैन ।

राष्ट्र समृद्ध हुन आन्तरिक र बाह्य सम्बन्धहरूको उचित प्रबन्ध गर्नु जरुरी हुन्छ । तर अहिले भएका धेरैजसो सम्झौतामा आन्तरिक र बाह्य सन्तुलन गुम्ने सम्भावना देखिन्छ । आन्तरिक रूपमा नरम शक्ति निर्माणको नाममा 'सामाजिक इन्जिनियरिङ' को प्रक्रिया अगाडि बढ्दै छ, जसले कालान्तरमा हाम्रो सामाजिक संरचना परिवर्तन गर्नेछ । यसको दूरगामी असर हाम्रो राष्ट्रिय पहिचानमा पर्न जानेछ । ने

# एसियाली सभ्यताको प्रस्ताव

उत्तरी छिमेकी चीनका राष्ट्रपति सी चिनफिङ नेपालको दक्षिणी छिमेकी भारतका प्रधानमन्त्री नरेन्द्र मोदीसँग दोस्रो अनौपचारिक शिखर वार्ता सम्पन्न गरेलगत्तै दुई दिने नेपाल भ्रमणका लागि २५ असोज अपराह्न काठमाडौँ उत्रेका थिए। संसारको सबभन्दा शक्तिशाली राष्ट्र बन्ने सँघारैमा पुगेको चीनका लागि सीमा जोडिएको नेपाल अनि चीनलाई नै पछ्याउँदै संसारको शक्तिशाली राष्ट्र बन्ने दौडमा रहेको भारतजस्तो ठूलो छिमेकलाई पनि विश्वास र सहयात्रामा साथ लिएर अघि बढ्दा मात्र त्यो हैसियतको स्वीकार्यता बढ्छ। र, विद्यमान मतभेद हुँदाहुँदै पनि यस्तो स्वीकार्यता आर्जन गर्नु अपरिहार्य छ भन्ने सचेतना चिनियाँ नेतृत्वले प्रदर्शित गरेको छ।

यो महत्त्वाकांक्षा पूर्ति गर्न असमझदारीका असहज मुद्दा थाती राखेर तात्कालिक महत्त्वका आर्थिकलगायत साझा स्वार्थहरूको आदानप्रदानमा केन्द्रित हुनु त नियमित कूटनीतिमा आवश्यक पर्छ नै। तर सम्बन्धलाई दीर्घकालीन सहकार्य सम्भव बनाउन यी नियमित कूटनीतिक आवश्यकताभन्दा उदात्त, साझा र लोकप्रिय लक्ष्यसमेत पहिचान हुन सक्नुपर्छ। यस पटकको भारत भ्रमणका लागि राष्ट्रपति सीले 'दिगो सम्बन्ध विकासको प्रेरक शक्तिका रूपमा एसियाली सभ्यताको गौरव निर्माण गर्ने' प्रस्ताव अघि सारे। त्यसका लागि भारत र चीन विकास तथा 'समृद्धिको साझा लक्ष्य हासिल गर्नका लागि सभ्याताहरूबीचको पारस्परिक आदानप्रदान र अध्ययनलाई प्रवर्द्धन गर्न सहमत भए।' शिखर वार्तापछिको औपचारिक वक्तव्यमा यिनै आकांक्षा लिपिबद्ध भए।

वास्तवमा हिमालय वारपारको उपमहाद्वीप वैदिक, बुद्धिस्ट, कन्फ्युसियन बौद्धिक-सांस्कृतिक धरोहर र साझा नदीघाँटी सभ्यताको उद्गम र विकासस्थल हो। भारतले चेन्नाई नजिकैको महाबलीपुरम सी-मोदी शिखरवार्ताका लागि छान्नु पनि सभ्यता अनुरागकै विम्ब हो। महाभारतका प्रमुख पात्र अर्जुनले तपस्या गरेको चित्रित ऐतिहासिक प्रस्तर मूर्तिहरू भएको यो स्थल वैदिक हिन्दु सभ्यताको महत्त्वपूर्ण स्मारक हो। नेपालमै पनि सीले बुद्धभद्र (र पाओ युन) का सन्दर्भलाई अगाडि सारेर नेपाल-चीन साझा सभ्यता र युगौँदेखिको सम्बन्धलाई स्मरण गराए। सिंगो उपमहाद्वीपलाई एउटै सभ्यताको सूत्रमा समेट्ने र त्यसलाई समृद्ध लक्ष्यको साझा पृष्ठभूमि बनाउने प्रस्तावना नयाँ हो। यसलाई परिणाममुखी बनाउने अभीष्टले नै सीले भारत र नेपाल दुवै देशको औपचारिक भ्रमणलाई एउटै फन्कोमा समेटेका हुन् भन्ने अनुमान लगाउन गाह्रो छैन।

यसको अर्थ, एउटा सार्वभौम राष्ट्रका हैसियतमा सीको नेपाल भ्रमणको सन्दर्भ भारतसँग नजोडे पनि विशिष्ट महत्त्व



**अच्युत वाग्ले**

नभएको होइन। जति नै तीतो लागे पनि चीनसँगको नेपालको सम्बन्ध क्षेत्रीय भूराजनीति, खासगरी भारत-चीन सम्बन्धको प्रकृतिमा धेरै हदसम्म निर्भर छ र रहनेछ। यसको खास पृष्ठभूमि र विरासत छ, जसलाई तात्त्विक रूपान्तरण गर्न अत्यन्तै साहसिक र दूरदर्शी नेतृत्व चाहिन्छ। यो औपचारिक भ्रमणका सफलताको परख पनि यिनै आयामको प्रकाशमा मात्र यथार्थपरक ढंगले गर्न सकिन्छ।

यति उच्चस्तरीय भ्रमणको सफलता मापन चार पक्षलाई विशिष्ट केस्रामा छुट्याएर गर्नु वान्छनीय हुन्छ। एक- भ्रमणकै सफलतापूर्वक आयोजन, आतिथ्य एवं समापन। दुई- नेपालको हितका थाती रहेका जरुरी मुद्दाको सम्बोधन। तीन- आपसी हितका मुद्दालाई समाधान गर्ने प्रस्ट अवधारणा, तदारुकता र वातावरण निर्माण। र, चार- भविष्यको सबल सम्बन्धका लागि नयाँ मार्गचित्रको प्रस्तावना।

एक- आयोजन र आतिथ्यका दृष्टिमा यो भ्रमणलाई असफल भन्नुपर्ने कारण छैन। आफू नेपालको आतिथ्यबाट हर्षविभोर भएको सन्देश चिनियाँ सञ्चार माध्यमहरूले राष्ट्रपति सी काठमाडौँ छाड्नुअघि नै प्रसारित गराएका थिए। यो कृतज्ञतामा कूटनीतिक औपचारिकताभन्दा उपल्लो कोटिको संवेदनशीलता प्रदर्शित छ। २३ वर्षपछि नेपालको औपचारिक भ्रमणमा आएका छिमेकी मित्रराष्ट्र चीनका राष्ट्रपतिलाई नेपालले दिएको आतिथ्यको यो प्रशंसाले दुई मुलुकबीचको कूटनीतिक सम्बन्धले वास्तवमै कदर पाएको छ।

२३ वर्षअघि र वर्तमानको चीन र चिनियाँ राष्ट्रपतिको विश्वसामु आर्थिक, रणनीतिक र सामरिक हैसियतमा चामत्कारिक छलाङ आएको छ। संसारको सबभन्दा शक्तिशाली राष्ट्र बन्ने सँघारैमा पुगेको मुलुकका राष्ट्रपतिको अहिलेको घडीमा नेपाल भ्रमणको अलग र ताजा महत्त्व छ। नेपाल राजनीतिक संक्रमणबाट स्थायित्वमा विश्वसनीय ढंगले पदार्पण गरेपछि मात्र यति उच्चस्तरीय भ्रमण गर्ने सन्देश चीनले नेपालको राजनीतिक नेतृत्वलाई धेरै अगाडिदेखि नै दिएको हो। अहिले पूर्ण बहुमतको त्यो पनि कम्युनिस्ट पार्टीको सरकार सत्तामा भएका बेला भ्रमणको यो अवसर जुटेको छ। र, नेपालको आतिथ्यलाई मुख्य अतिथिले नै मुक्तकण्ठले प्रशंसा गर्नु भ्रमण सफल आयोजनको महत्त्वपूर्ण मापन हो। तर यत्तिलाई नै सरकारले आफ्नो चरम सफलताका रूपमा डम्फु बजाउनु आवश्यक छैन।

दुई- नेपालका लागि यतिखेरको सबभन्दा जरुरी आर्थिक मुद्दा भयावह गतिमा बढिरहेको चीनसँगको व्यापार घाटा र त्यसको सम्बोधन हो। गत असार मसान्तमा सकिएको आर्थिक वर्षको तथ्यांकले चीनतर्फ एक रुपैयाँको निर्यात हुँदा उताबाट एक सय रुपैयाँ बराबरको आयात भइरहेको



# वित नयाँ गौरव

छ । वर्षभरिको कुल निर्यात २ अर्ब १४ करोड रुपैयाँको हुँदा २ खर्ब ५ अर्ब रुपैयाँको आयात भएको छ । निर्यात घट्दो र आयात द्रुत गतिमा बढ्दो क्रममा छ । प्रस्ट हो, नेपालले निर्यातयोग्य सामान उत्पादनै गरेको छैन । तर यही सत्य अवसर पनि हो । सम्भावित चिनियाँ लगानीलाई त्यस्तो उत्पादनशील क्षेत्रमा लगानी गराउन आवश्यक छ, जसमा नेपाली श्रम र स्रोत प्रयुक्त हुन्छ र उत्पादित वस्तुको बजार भने लगानीकर्ताको पहलमा चीनमा उपलब्ध हुन्छ । यसतर्फ भने भ्रमणमा कुनै तात्विक कुरा उठेन । योजना बनेन । अरू सफलताका सबै कथालाई यसले छायामा पारेको छ किनकि यो अर्थतन्त्रको दिगो हित-अहितसँग प्रत्यक्ष सरोकारको विषय हो ।

तीन- नेपालजस्तो मुलुकले आफ्नो हितमा चीनसँग अपेक्षा गर्ने एकल द्वार चीनले यतिखेर उसको महत्त्वाकांक्षी 'बेल्ट एन्ड रोड इनिसियटिभ (बीआरआई) लाई बनाएको छ । नेपाल बीआरआईमा औपचारिक रूपमा सहभागी भएको छ तर नेपाललाई उक्त योजनामा जल र जमिनमा पहिचान गरी विकास गरिरहेका ६ वटा 'नयाँ सिल्क रोड' ले सीधै छोएको छैन । यसको सट्टा नेपाललाई समेट्न 'ट्रान्स हिमालयन मल्टिडाइमेन्सनल कनेक्टिभिटी नेटवर्क' प्रस्तावित त भएको छ तर यसको 'बीआरआई' सँगको तादात्म्य र समेट्ने भौगोलिक एवं सहकार्यका क्षेत्रको प्रस्ट पहिचान हुन बाँकी छ । नेपाली अधिकारीहरूको यो नेपालका लागि मात्रै सिर्जना गरिएको सहकार्यको सन्जाल हो भन्ने व्याख्यालाई चीनले मानेको छैन । भुटान र उत्तरी भारतसम्मको सम्पर्क सन्जाल विस्तारलाई यसले समेट्ने व्याख्या उनीहरूको छ । नेपालको आफ्नो कूटनीतिक अपरिपक्वताले 'बीआरआई' अन्तर्गतमा उपयुक्त परियोजना समयमै छनोट हुन नसक्नु र नेपाल सरकारले छनोट गरेका योजनामा चिनियाँ सरकार, त्यहाँका लगानीकर्ताको खास चासो नदेखिएको अवस्था अहिले छ । यसलाई नयाँ शिराबाट सोच्ने अवसर यो राजकीय भ्रमणले जुटाएको थियो, त्यो सायद गुम्यो ।

नेपाल क्रमशः जसरी संसारका ठूला खेलाडीहरूको रणनीतिक प्रयोगशाला बनिरहेको छ, त्यसलाई सीधै सम्बोधन गर्ने परराष्ट्र नीति र त्यसको प्रभावकारी सञ्चालन हुन नसकेका कारण नेपालले यस्ता भ्रमणबाट सहजै प्राप्त हुने लाभसमेत लिन सकेको छैन । बीआरआईमा नेपाल सहभागी भएकामा भारतको अप्रसन्नता, इन्डो-प्यासिफिक रणनीतिमा सहभागी भएकामा चीनको अप्रसन्नता र चीनसँगको बढ्दो उठबसबाट सबै पश्चिमा राष्ट्रहरूको सशंकित व्यवहारलाई प्रस्ट जवाफ दिने तथा उनीहरूका चासोलाई वा चित्त दुखाइलाई सम्बोधन गर्ने परराष्ट्र नीति संस्थागत गर्न नेपाल चुकेको छ । आर्थिकभन्दा राजनीतिक उपभोग वा प्रचारका लागि चिनियाँ रेल भोलि नै काठमाडौं आइपुग्लाजस्तो प्रचार गर्ने शैलीले यस दिशामा गम्भीर गृहकार्य हुन सकेको छैन ।

चार- भविष्यको सबल सम्बन्धका लागि नयाँ मार्गचित्रको प्रस्ताव गर्ने सन्दर्भमा पनि धेरै सन्देह र थोरै आशा यो भ्रमणले देखाएको छ । यो आशालाई वास्तविक लाभमा अनुवाद गर्न, फेरि उही परराष्ट्र नीतिमा संस्थागत प्रस्टता र प्रभावकारिता आवश्यक छ । मुख्यतः यो भ्रमणले नेपाल-चीन सम्बन्धमा अब 'रणनीतिक साझेदारी' विशेषण थपेको छ । यसको पारिभाषिक प्रस्टता राज्यको तहबाट अएको छैन । परराष्ट्रमन्त्रीले मिडियामा यसलाई सामरिक अर्थमा नबुझ्न अनुरोध त गरेका छन् तर यसको वास्तविक उपादेयता, नेपालको हितको पक्ष र समेट्ने क्षेत्रबारे कुनै 'लिटरेचर' उपलब्ध छैन । भारतीय र पश्चिमा राष्ट्रहरूले यसलाई जसरी बुझेका र प्रतिक्रिया जनाएका छन्, त्यसलाई बेवास्ता गर्न सकिने अवस्था पटक्कै छैन ।



> नेपाल-भारत-चीन त्रिपक्षीय साझेदारी संयन्त्र नै निर्माण गर्न सकियोस् भन्ने जुन नेपालको अपेक्षा हो, त्यसलाई सीको भ्रमणले समेटेको उपमहाद्वीपीय फन्कोले सार्थक प्रस्थान बिन्दु दिएको छ ।

आशाको हकमा, नेपालको आर्थिक र सुरक्षा हित प्रवर्द्धन गर्ने हकमा नेपालका दुई छिमेकीबीच प्रतिस्पर्धा होइन, सहकार्य गर्ने वातावरण बनोस् । नेपाल-भारत-चीन त्रिपक्षीय साझेदारी संयन्त्र नै निर्माण गर्न सकियोस् भन्ने जुन नेपालको अपेक्षा हो, त्यसलाई सीको भ्रमणले समेटेको उपमहाद्वीपीय फन्कोले सार्थक प्रस्थान बिन्दु दिएको छ । र, एसियाली सभ्यताको गौरव पुनरुत्थानको अवधारणामा समेट्न चाहेको देखिएको छ । यसबाट नेपाल बाहिर बस्नुपर्ने कारण छैन । र, यही त्रिपक्षीयता यो गौरवको एउटा महत्त्वपूर्ण अवयव बन्न सक्छ । ने

ट्वीटर : @DrAchyutWagle

# सी–मोदी सन्तुलनको परीक्षा

सी चिनफिङको भ्रमणबाट नेपाल–चीन सम्बन्ध 'रणनीतिक साझेदार' को तहमा उक्लेको छ। यसबाट चीनले नेपाललाई दीर्घकालीन साझेदारका रूपमा बुझेको लख काट्न सकिन्छ। नेपालमा राजनीतिक स्थायित्व आएसँगै विदेश नीतिमा पनि स्थायित्व कायम होस् भन्ने अपेक्षा चीनको छ।



**सन्तोष शर्मा पौडेल**

एसियाली समाजमा कसलाई कुन रूपमा सम्बोधन गरिन्छ भन्ने विषयले महत्त्व राख्ने गर्छ। नेपालसँगको सम्बन्धलाई चीनले रणनीतिक साझेदारी दर्जा दिनु नेपाली विदेश नीतिका लागि गम्भीर विषय हो। सीसँगका वार्ताहरू बीआरआई, ट्रान्स हिमालयन नेटवर्क र कनेक्टिभिटीमा नै केन्द्रित रहे। भ्रमण क्रममा भएका साझेदारीले चीन-नेपाल सम्बन्धका लागि निर्णायक दिशानिर्देश गरेको छ।

नेपालमा निर्वाचित कम्युनिस्ट पार्टी सत्तामा छ। भारतीय नाकाबन्दीपछि भारतविरोधी राष्ट्रवादको नारामा नेकपा सत्तामा पुगेको हो। यसर्थ सीको भ्रमणले वर्तमान सरकारलाई अझ वैधानिकता दिनेछ। साथै, नेपालको भारत-चीनसँग सन्तुलित विदेश नीति हुनुपर्छ भन्ने विचारलाई पनि बल दिनेछ।

नेपाल-चीन सम्बन्धमा केही प्रगतिबीच नेपालले आवश्यक तयारी नगरेको देखियो। फौजदारी विषयमा पारस्परिक कानुनी सहायतासम्बन्धी सन्धिमा हतारमै सहमति भयो। भगिनी सम्बन्ध समझदारीजस्तो विषय पनि हतारिएर सी भ्रमणका बेला हस्ताक्षर गरियो।

त्यस्तै, लिस्ट अफ इन्स्ट्रुमेन्टमा भएका कतिपय समझदारी राष्ट्रपतिको उपस्थिति र सहभागिताबिनै सम्भव थिए। यसले समझदारीका बुँदा धेरै बनायो। तर ठूला र दूरगामी महत्त्वका विषयले प्राथमिकता पाएन र प्राथमिकता पाएका विषयमा पनि आवश्यक तयारी गरेको पाइएन।

यो भ्रमणलाई धेरै परराष्ट्रविद्ले सकारात्मक व्याख्या गरे पनि समझदारी कार्यान्वयनबिना कुनै ठोस प्रगति हुने छैन। नेपालले नै समझदारीमा भएका योजना कार्यान्वयनमा तत्परता देखाउनुपर्छ। यसबारे सीले नै सम्झाउनु नेपाली नेतृत्वका लागि लज्जास्पद छ।

धेरैले सी भ्रमणलाई नरेन्द्र मोदीको २०१४ को भ्रमणसँग तुलना गरेका छन्। प्रधानमन्त्री बनेको तीन महिनाभित्रै उनले नेपाल भ्रमण गरेका थिए, जुन भारतीय प्रधानमन्त्रीका लागि १७ वर्षमा पहिलो थियो। उनले आफ्नो भ्रमणमा सामीप्य, आत्मीयता र नेतृत्व प्रदर्शन गरेका थिए। भ्रमण बखत एक्कासि साधारण जनतामाझ नै पुगेर मन जितेका थिए।

मोदीले नेपालका लागि विकासका नीति पनि सुझाएका थिए। मोदी नेपालमा एक समय यति लोकप्रिय भए कि यहाँ चुनाव लडे पनि जित्छन् भनेर ठट्टा गरिन्थ्यो। मोदीले चार एजेन्डामा जोड दिएका थिए- सहकार्य, कनेक्टिभिटी, संस्कृति र संविधान। उनले संविधानसभामा नेपालमा समृद्धिका लागि हिट (हाइवे, इनफर्मेसन टेक्नोलोजी र ट्रान्समिसन लाइन) सूत्र दिएथे। भारतप्रति नेपालमा हुने आलोचना मत्थर पार्न उनको 'भारतले नेपाल मामिलामा हस्तक्षेप नगर्ने बरु विकासमा सहयोग गर्ने' प्रतिबद्धता अहिले हेर्दा व्यंग्यात्मक लाग्छ।

सी र मोदीका नेपाल भ्रमण धेरै हदसम्म उस्तै छन्। सीसँग संयुक्त समझदारीमा पनि व्यापार, पारवहन, कनेक्टिभिटी र जलस्रोतमा क्षेत्रीय सहकार्य बढाउन अरू अवसर खोजी गर्ने प्रतिबद्धता समावेश छ। दुवैले द्विपक्षीय सहकार्यमा निर्माण भएका आयोजनामा भएको ढिलाइबारे पनि चासो राखेका थिए। सीसँगको समझदारीजस्तै भारतीय प्रधानमन्त्रीसँग पनि संशोधित रेलवे सेवा समझदारी, व्यापार र पारवहनसम्बन्धी समझदारी र लगानीसम्बन्धी बिट्टालगायत विषयमा छलफल भएको थियो।

नेपाली केही टिप्पणीकारले यी भ्रमणलाई भारत-चीनको नेपालमा प्रभावका लागि प्रतिस्पर्धाका रूपमा चित्रण गरेका छन्। तर दुई भ्रमणमा भएका समझदारी हेर्दा यी प्रतिस्पर्धात्मकभन्दा पनि एकअर्काका पूरक देखिन्छन्। कुनै पनि ट्रान्स हिमालयन कनेक्टिभिटी सन्जाल महँगो हुने हुँदा त्यस्तो सन्जालको आर्थिक व्यावहारिकताका लागि नेपालको दक्षिण सिमाना हुँदै भारतसम्म जोड्नुपर्ने आवश्यकता रहन्छ। ९० अर्ब अमेरिकी डलर व्यापार हुने भारत र चीनबीच नेपाल राम्रो पारवहन मार्ग बन्न सक्छ। भारत बीआरआईमा नजोडिए पनि नेपाल र चीनबीचको कनेक्टिभिटीबाट धेरै फाइदा लिन सक्छ। यो चीनले जोड दिने गरेको वीन-वीन साझेदारीअनुरूप तीनै राष्ट्रका लागि लाभदायी हुने देखिन्छ।

त्यसैले नेपालले यी दुई देशसँगको सम्बन्ध एकअर्काविरुद्ध उपयोग नगरी हरेकको औचित्य र आवश्यकताका आधारमा निर्धारण गर्नुपर्छ। सी र मोदीको भ्रमणमा गरिएका सम्झौता र भ्रमणले दिएको सन्देश नै नेपाल-चीन र नेपाल-भारत सम्बन्ध एकअर्काका परिपूरक हुन् भन्ने हो। भारत हुँदै नेपाल आएका सीले पनि चीनले भारतलाई नेपाल सम्बन्धमा आफ्नो साझेदारका रूपमा बुझेको सन्देश दिन खोजेका छन्। ■

**त्रिविमा अन्तर्राष्ट्रिय सम्बन्धका अध्यापक पौडेल नेपाल इन्स्टिच्युट फर पोलिसी रिसर्चसँग आबद्ध छन्।**

**पवन आचार्य**

नेपाली क्रिकेटले एउटा खुसी र अर्को विस्मयको सामना गर्‍यो, असोजको अन्तिम साता। साढे तीन वर्षभन्दा बढी समयदेखि अन्तर्राष्ट्रिय क्रिकेट परिषद् (आईसीसी) को निलम्बनमा रहेको नेपाल क्रिकेट संघ (क्यान) माथिको निलम्बन २७ असोजमा ससर्त फुकुवा भयो । क्यानमाथिको निलम्बनले नेपालमा क्रिकेट उपस्थित भए पनि नभएसरह थियो । त्यसैले निलम्बन फुकुवामा क्रिकेट समर्थकले खुसी नमनाउने कुरै भएन । तर यो खुसीमा नेपाली समर्थक धेरै बेर रमाउन पाएनन् ।

क्यानमाथिको निलम्बन फुकुवाको २४ घन्टा नबित्दै नेपाली क्रिकेटलाई पछिल्लो एक दशकदेखि नेतृत्व प्रदान गर्दै आएका राष्ट्रिय टोलीका कप्तान पारस खड्काले कप्तानको जिम्मेवारीबाट अलग हुने घोषणा गरे। क्यान नहुँदा नेपाली क्रिकेट भनेकै पारसजस्ता थिए। उनी नेपाली क्रिकेटको टिमको कप्तान, टिम छनोट समिति, मेन्टर आदि सबै खाले भूमिकामा थिए। त्यसैले पनि क्रिकेट समर्थकहरू उनको निर्णयबाट अचम्मित हुनु स्वाभाविक थियो ।

अर्को संयोग के पनि पर्‍यो भने क्यानमा नयाँ नेतृत्व चयन हुनु र पारसको राजीनामा आउनु एकै समय भयो । काठमाडौँमा हालै भएको साधारणसभाबाट चतुरबहादुर चन्द नेतृत्वमा क्यानको कार्यसमिति निर्वाचित भएर आउनु र पारसको राजीनामा एकै समयजस्तो हुन गयो ।

त्यसो त, अघिल्लो कार्यकालमा क्यानमा आर्थिक अनियमितताको अभियोग लगाएर अख्तियार दुरुपयोग अनुसन्धान आयोगमा उजुरी गर्ने भनेर चन्द समूहले पारसमाथि आरोप लगाएको थियो। उनकै कारण आफूहरू बयानका लागि अख्तियार पुग्नुपरेको भन्ने बुझाइ तत्कालीन नेतृत्वमा रहेकाहरूको थियो। अधिवेशनमा पारसले लबिइङ गरेका र सहयोग गरेकाहरूले चुनाव हार्नुले पनि उनको राजीनामालाई ट्रिगर गरेको बुझाइ धेरैको छ।

पारस स्वयंले पनि क्यानमा नयाँ नेतृत्व आइसकेपछि काम गर्न सहज नहुने अनुमान लगाइसकेका थिए । निकटहरूसँग उनले सिंगापुर र ओमान भ्रमणपछि क्रिकेटबाट विश्राम लिने संकेत गरिसकेका थिए। टिममा एक दशकयता नेतृत्व प्रदान गरे पनि पछिल्लो समय नेपाली टिममा विभिन्न गुट बन्न थालिसकेका थिए । केही नयाँ र चर्चित क्रिकेटरले पारसविरुद्ध मोर्चाबन्दी सुरु गरिसकेका थिए । यस्तोमा काम गर्न र नतिजा ल्याउन अप्ठेरो पर्ने अनुमान लगाउन पारसलाई खासै गाह्रो भएन। पारसले नेपाली क्रिकेटलाई जुन स्तरमा पुर्‍याए, अब यहाँभन्दा माथि लैजान निकै मिहिनेत र लगानी आवश्यक पर्नेमा कुनै शंका छैन । यस्तोमा क्यानको नेतृत्व आफूअनुकूलको नआउनु र पछिल्लो समय नतिजाले पनि साथ नदिएपछि पारस कप्तानीको जस र अपजसको भारी बिसाउने मनस्थितिमा पुगिसकेका थिए ।

# कप्तानमा फर्किन्नँ

**क्यानले निर्णय पुनर्विचार गर्न आग्रह गरेको छ। तपाईं फिर्ता हुनु होला ?**

मैले निकै सोचविचार गरेर कप्तानी छाड्ने निर्णय गरेको हुँ। नेपाली क्रिकेट पारस खड्काको कप्तानीपछि मात्रै सुरु भएको होइन । एउटा व्यक्तिमा कोही पनि अड्किन हुँदैन । मैले इमानदार भएर कप्तानको जिम्मेवारी निर्वाह गरेँ। अब आउनेले पनि त्यस्तै गर्नुपर्छ। म मेरो निर्णयमा अडिग छु। नेपाली टिमको कप्तानका रूपमा फर्किन्नँ ।

**क्यानमाथिको निलम्बन फुकुवा भएलगत्तै राजीनामा आयो नि ?**

नेपालको क्रिकेट क्यानको निलम्बनसँगै अड्किएको अवस्थामा थियो। हामी कहीँ-कतै पनि अघि बढ्न नसक्ने अवस्थामा पुगेका थियौँ। राष्ट्रिय क्रिकेट टिमको प्रदर्शनबाट मात्रै नेपाली क्रिकेट माथि उकासिने अवस्था थिएन। त्यस्तोमा मैले क्रिकेट र कप्तानीबाट विश्राम लिने अवस्था हुन्थ्योजस्तो मलाई लागेन । क्यानमा नयाँ नेतृत्व आएको छ। निलम्बन पनि फुकुवा भएको छ । अब उहाँहरूले नयाँ सोचबाट अघि बढ्नुपर्छ । त्यसका लागि मैले बाटो खोलिदिएको मात्रै हुँ । विश्राम लिनुपर्छ भन्ने मनमा त लागिरहेको थियो। म क्यान निलम्बन फुकुवाको दिन कुरेर बसेको थिएँ ।

**क्यान पदाधिकारीले पारसको राजीनामाले नेपाली क्रिकेटको आन्तरिक विवाद समाधान नभएको सन्देश गयो भनेका छन्। तपाईं त्यो मान्नुहुन्छ ?**

कुरालाई जहाँ जसरी मोडे पनि हुन्छ। आन्तरिक विवाद भनेको के हो ? उहाँहरूको पूरै प्यानल नै निर्वाचित भएर आएको छ । यसमा कहाँ विवाद छ ? राजीनामा नितान्त मेरो व्यक्तिगत निर्णय हो। यसबाट उहाँहरूलाई कसरी अप्ठेरो पर्न गयो ? मैले बुझ्न सकेको छैन ।

## हतारमा राजीनामा

पारसले कप्तानबाट राजीनामा दिइसकेपछि धेरैले भने, "विकल्प तयार नभई राजीनामा दिनु राम्रो भएन। पारसको विकल्प को त ?" नेपाली टोलीका पूर्वकप्तान पवन अग्रवालको बुझाइमा पारसले हतारमा निर्णय गरे। उनी भन्छन्, "प्रशासनिक हिसाबले नेपाली क्रिकेट बिस्तारै लिकमा आउने क्रममा थियो। यही बेला पारसको राजीनामा आयो। टिम र समग्र नेपाली क्रिकेटकै लागि पारसले अझै धेरै योगदान दिन बाँकी छ भन्ने मेरो बुझाइ हो।"

सन् २००९ मा विनोद दासलाई विस्थापित गरेर कप्तानको जिम्मेवारीमा आएका पारसले एक दशक एकछत्र राज गरे। उपलब्धि र नतिजाकै हिसाबले पनि पारसको कप्तानीको विकल्प नेपालले कहिल्यै खोजेन। तर अब उनको विकल्पबारे सोच्नुपर्ने बेला आएको छ, यतिबेला भन्न थालिएको छ, "पारसको निर्णय सही होला तर समय ठीक भएन।"

क्यान अध्यक्ष चतुरबहादुर चन्द स्वयं पनि पारसको निर्णय उपयुक्त नभएको टिप्पणी गर्छन्। आधिकारिक रूपमा आफूलाई राजीनामाबारे जानकारी नआएको भन्दै उनी थप्छन्, "बल्लबल्ल निलम्बन फुकुवा भएर नेपाली क्रिकेटमा खुसी सञ्चार भएका बेला पारसको राजीनामा सुन्नमा आयो। यसबेला उनले यस्तो ठूलो निर्णय नलिएको भए हुन्थ्यो।"

चन्दका अनुसार पारसको राजीनामाले क्यानको निलम्बन फुकुवा भए पनि आन्तरिक विवाद भने कायमै रहेको भन्ने सन्देश प्रवाह हुन गएको छ। नयाँ कार्यसमितिसँगको मतभेदका कारण राजीनामा प्रकरणको विकास नभएको उनको तर्क छ। "विगतका कुरा बिर्सेर हामीसँग छलफल गरेर क्रिकेटको विकासका लागि अघि बढ्नुपर्ने हो। उहाँले हामीसँग केही छलफल गर्नुभएको छैन," उनले भने, "तर मानिसका लागि क्यानसँगको विवादका कारण राजीनामा दिएको भनेर अनर्गल प्रचार गर्ने बहाना भएको छ।"

राष्ट्रिय टोलीका उपकप्तान ज्ञानेन्द्र मल्ल भने पारसको व्यक्तिगत निर्णयको सबैले सम्मान गर्नुपर्ने तर्क गर्छन्। पारसले हतारमा निर्णय नगरेको भन्दै उनले राजीनामाजस्तो गम्भीर विषयमा धेरै सोचेर र सम्झेर नै निर्णयमा पुगेको हुनुपर्ने बताए। राजीनामाबारे जानकारी लिन आयोजित पत्रकार सम्मेलनमा पारसले ज्ञानेन्द्र आफ्नो विकल्प हुन सक्ने बताएका थिए। पारसको अनुपस्थितिमा धेरै पटक नेपाली टोलीको नेतृत्व गरिसकेका ज्ञानेन्द्र कप्तानीको जिम्मेवारी नौलो नभएको र संघले विश्वास गरे सम्हाल्न तयार रहेको बताउँछन्। तर उनलाई पनि लागेको छ, पारसको राजीनामा सही भए पनि समयचाहिँ त्यति गतिलो भएन।

## जीतका पर्याय

नेपाली क्रिकेटले पछिल्लो एक दशकमा मारेको छलाङका साक्षी मात्रै होइनन्, कर्ता पनि हुन्, पारस। त्यसैले पनि नेपाली क्रिकेटको 'गोल्डन एरा' को नेतृत्व गरेका अलराउन्डर पारसलाई 'मिस' गर्नेहरू धेरै छन्।

**कप्तानी मात्रै छाडेको हो कि क्रिकेटबाट पनि विश्राम लिनुभएको ?**

अहिलेलाई चाहिँ कप्तानीबाट राजीनामा गरेको हुँ। केही समय अन्तर्राष्ट्रिय क्रिकेटबाट पनि विश्राम लिने योजना छ किनभने अब अन्तर्राष्ट्रिय खेल पनि धेरै छैनन्। अब राष्ट्रिय टोली कसरी बन्छ भन्नेमा पनि धेरै कुरा निर्भर गर्छ। घरेलु क्रिकेटमा त सक्रिय नै रहन्छु। भर्खर ३२ वर्षको हुँदै छु, ४०-४५ वर्षसम्म क्रिकेट खेल्ने योजना छ। कुनै न कुनै रूपमा म नेपाली क्रिकेटसँगै जोडिइरहन्छु। क्रिकेटभन्दा पर त म कहिले पनि छैन र हुन्नँ। हुन सक्छ, म अब खेलाडीभन्दा अर्को रूपमा पनि आउन सक्छु।

**प्रशिक्षक बन्ने योजना त छैन नि ?**

एउटा सफल खेलाडी प्रशिक्षक हुनुपर्छ भन्ने छैन। मैले आफूलाई खेलाडीका रूपमा मात्रै प्रस्तुत गर्दै आएको छु। प्रशिक्षण दिने कुरामा म त्यति कम्फर्टेबल फिल गर्दिनँ। राम्रो क्याप्टेन भएँ भन्दैमा राम्रो कोच हुनुपर्छ भन्ने पनि छैन। मेरो पहिलो प्राथमिकता भनेको क्रिकेट प्रशासन हो। भविष्य कसले देखेको छ र ? अरू केहीमा सफल भइएन भने प्रशिक्षणमा पनि आउन सक्छु।

**क्यानको नेतृत्वमा आउने वा व्यवस्थापनमा लाग्ने ?**

क्रिकेटको व्यवस्थापनमा आउने मेरो योजना मात्रै हैन, रुचि पनि हो। गत वर्ष हामीले पोखरा प्रिमियर लिग गर्‍यौँ। अहिले वुमन्स च्याम्पियन्स लिग आयोजना गरिरहेका छौँ। क्रिकेटको व्यवस्थापनमा आउनैपर्छ। यहाँ आएर नेपाली क्रिकेटलाई अघि बढाउन सकिन्छ। मैले जीवनमा जानेको क्रिकेटभन्दा अर्थोक केही छैन। त्यसैले कुनै न कुनै रूपमा क्रिकेटको प्रशासनिक क्षेत्रमा लाग्ने योजना छ। हेर्दै जाऔँ, के हुन्छ !

**क्यानले अहिले नै कुनै पदीय दायित्वमा अफर गर्‍यो भने बहन गर्ने ?**

अहिले नै म त्यसका लागि मानसिक रूपमा तयार भइसकेको छैन। केही समय क्रिकेट व्यवस्थापकका रूपमा काम गर्छु। म केही समय विश्राम लिन चाहन्छु। खेल जीवन नै त्यागेको हैन। पहिले खेलमै फोकस हुन्छु। पछि मात्रै अन्य पदीय दायित्वका बारेमा सोचूँला।

**क्यानको वर्तमान नेतृत्वबारे तपाईंको धारणा ?**

एउटा खेलाडीका रूपमा क्यानमा को आयो, को आएन भन्नेमा मेरो त्यति धेरै चासो र चिन्ता छैन। व्यक्तिबारे म कहिल्यै पनि धारणा बनाउँदिनँ। जो आए पनि नेपाली क्रिकेट अघि बढाउन संस्थागत प्रयास हुनुपर्छ। मैदानबाहिर उहाँहरू हुनुहुन्छ। मैदानभित्र हामी छौँ। सबै मिलेर अघि बढ्ने हो। क्यानले आवश्यक ठाने वा मैले जानेको विषयबारे सुझाव दिने कुरामा म पछि हट्दिनँ। क्यानमा नयाँ व्यक्तिभन्दा पनि सोच नयाँ हुनुपर्छ र त्यसको केन्द्रमा नेपाली क्रिकेटको विकास हुनुपर्छ भन्ने मान्यता मात्रै हो, मेरो।

**तपाईंको उत्तराधिकारी को देख्नुहुन्छ त ?**

अहिलेको स्थितिमा हेर्ने हो भने ज्ञानेन्द्र मल्ल नयाँ कप्तानका लागि उपयुक्त हुन्छजस्तो लाग्छ। टिममा ऊ सिनियर खेलाडी पनि हो। १० वर्षसम्म ऊ टोलीको उपकप्तान रह्यो। टिमवर्कलाई अघि बढाउन सक्ने व्यक्ति हो, ज्ञानेन्द्र। त्यसैले कम्तीमा १ वर्ष नेपाली टोलीको नेतृत्व ज्ञानेन्द्रलाई दिइयो भने न्याय हुन्छ।

सन् २००६ मा यू-१९ को प्लेट च्याम्पियनसिप जित्दा पारस उपकप्तानको जिम्मेवारीमा थिए । कप्तान थिए कनिष्क चौगाईं । तर चौगाईं धेरैजसो मैदानबाहिर नै हुन्थे र नेतृत्वको जिम्मेवारी पारसकै काँधमा आउँथ्यो । टोली नेता बनेर जित्ने र जिताउने टक पारसलाई त्यहीँबाट बस्यो ।

सन् २००७ बाटै नेपाली टोलीको उपकप्तान बनिसकेका पारसको पहिलो कप्तानी भने सम्झनलायक रहेन । २००९ को एसीसी ट्वान्टी-२० कपमा पहिलो कप्तानी गरेका पारस नेतृत्वको नेपाली टोली समूह चरणबाटै बाहिरियो । अर्को वर्ष पारसको कप्तानीमा नेपालले विश्व क्रिकेट लिग डिभिजन-५ को उपाधि जित्यो । त्यो नै आईसीसीको आयोजनामा भएको नेपालको पहिलो उपाधि थियो । सन् २०१० मै कुवेतमा भएको एसीसी ट्रफी एलिटमा नेपाली टोली ८ वर्षपछि फाइनलमा पुग्यो । फाइनलमा अफगानिस्तानसँग पराजित भए पनि पारसले नेपाली टोलीमा आशा र विश्वास सञ्चार गराए ।

२०११ मा काठमाडौंमै भएको एसीसी ट्वान्टी-२० को सेमिफाइनलमा पुगेपछि नेपालको ट्वान्टी-२० विश्वकप छनोट प्रतियोगिता खेल्ने ढोका खुल्यो । सन् २०१२ मा डिभिजन-४ को उपाधि जितेको नेपाल त्यही वर्ष ट्वान्टी-२० विश्वकप छनोटमा सहभागी १६ टोलीमध्ये सातौँ स्थानमा उक्लिन सफल भयो ।

नेपाली क्रिकेटका लागि सबैभन्दा सफल वर्ष रह्यो, सन् २०१३ । नेपालले त्यतिबेला बर्मुडामा सम्पन्न विश्व क्रिकेट लिग डिभिजन-३ को उपाधि र एसीसी ट्वाटी-२० कपको फाइनलमा स्थान बनायो । नामिबियामा भएको ट्वान्टी-२० विश्वकप छनोटमा तेस्रो भएको नेपालले २०१४ मा बंगलादेशमा सम्पन्न ट्वान्टी-२० विश्वकपको टिकट काट्यो । प्रतियोगितामा नेपालले अफगानिस्तान र हङकङलाई पराजित गरे पनि बंगलादेशसँगको हारले समूह चरणबाटै बाहिरिनुपर्‍यो । पारसको नेतृत्वमा नेपाली टोलीले अनेकन उतारचढाव बेहोरेको छ । जीतको गाथासँगै हारको पीडाको अनुभव पनि उनीसँग छ । नेपाली खेलकुदमा पारसले क्वाइन गरेको एउटा ब्रह्म-वाक्य छ, "जितेको खेलमा गल्ती देखिँदैन । हारले गल्ती देखाउँछ, खेलाडीको मिहिनेत र परिश्रम देखिँदैन ।" वर्ष सन् २०१४ मा पनि नेपाली टोलीले त्यही नियति भोग्यो ।

न्युजिल्यान्डमा आयोजित एकदिवसीय विश्वकप छनोटमा सहभागी १० टोलीमध्ये नवौँ भएपछि नेपाल डिभिजन-२ बाट रेलिगेसनमा पर्‍यो । तर सोही वर्ष डिभिजन-३ को विजेता बन्दै नेपाल दोस्रो डिभिजनमा पुन: उक्लियो । सन् २०१५ मा नेपालले आईसीसी विश्व क्रिकेट लिग च्याम्पियनसिपमा स्थान बनायो । उक्त प्रतियोगितामा सहभागिता निश्चित भएपछि नेपालले स्वत: डिभिजन-१ को मान्यता पायो ।

२०१७ मै डिभिजन-२ को फाइनलमा पुगेर नेपालले डिभिजन-१ को यात्रा तय गर्दै एकदिवसीय विश्वकप छनोटमा पनि स्थान बनायो । सन् २०१८ मा जिम्बाबेमा भएको एकदिवसीय विश्वकप छनोटमार्फत नेपालले मान्यता पाएको हो । यो पनि नेपाली क्रिकेटको अर्को ऐतिहासिक सफलता हो, जसको नेतृत्व उनै अलराउन्डर पारसले गरेका थिए । तर २०१९ मा ट्वान्टी-२० विश्वकपको एसियाली छनोटमा सिंगापुरसँग पराजित भएपछि नेपाल ग्लोबल छनोटमा पुग्न भने असफल रह्यो ।

## सफल कप्तानको समयरेखा

**२००९** एसीसी ट्वान्टी-२० प्रतियोगितामा कप्तानी जिम्मेवारी

**२०१०** विश्व क्रिकेट लिग डिभिजन-५ उपाधि

**२०११** एसीसी ट्वान्टी-२० कपमा सेमिफाइनल

**२०१२** विश्व क्रिकेट लिग डिभिजन-४ उपाधि
ट्वान्टी-२० विश्वकप छनोटमा सातौं

**२०१३** विश्व क्रिकेट लिग डिभिजन-३ उपाधि
एसीसी ट्वान्टी-२० फाइनल
विश्वकप छनोटमा तेस्रो भएपछि विश्वकपमा ऐतिहासिक छनोट

**२०१४** ट्वान्टी-२० विश्वकपमा अफगानिस्तान र हङकङलाई हराएको
विश्व क्रिकेट लिग डिभिजन-३ उपाधि

**२०१५** २०१५ देखि २०१७ सम्म विश्व क्रिकेट लिग च्याम्पियनसिप

**२०१५** विश्व क्रिकेट लिग डिभिजन-२ फाइनल

**२०१५** एकदिवसीय विश्वकप छनोटमार्फत ऐतिहासिक एकदिवसीय अन्तर्राष्ट्रिय मान्यता




**यू-१५ सिंगापुरविरूद्ध**
(यू-१५ एसिया कप, २००२)
**यू-१७ मलेसियाविरूद्ध**
(एसीसी यू-१७, एलिट कप २००४)
**यू-१९ मलेसियाविरूद्ध**
(युथ एसिया कप, २००३)
**एकदिवसीय भुटानविरूद्ध**
(एसीसी ट्रफी, २००४ )
**ट्वान्टी-२० मलेसियाविरूद्ध**
(एसीसी ट्वान्टी २०, २००७ )
**वन डे अन्तर्राष्ट्रिय नेदरल्यान्ड्सविरूद्ध**
(अगस्ट १, २०१८ )
**ट्वान्टी २० अन्तर्राष्ट्रिय हङकङविरूद्ध**
(मार्च १६, २०१४ )



### कीर्तिमानी क्रिकेटर

यो वर्ष पारस ट्वान्टी-२० अन्तर्राष्ट्रिय क्रिकेटमा शतक प्रहार गर्ने पहिलो नेपाली ब्याट्सम्यान बने । यसअघि २८ असारमा मलेसियासँगको मैत्रीपूर्ण शृंखलामा पारसले सर्वाधिक ८६ रनको इनिङ्स खेलेका थिए । ट्वान्टी-२० क्रिकेटमा यसअघि सो कीर्तिमान महबुब आलमको नाममा थियो । महबुबले सन् २०११ को एसीसी ट्वान्टी-२० कपमा साउदी अरेबियाविरुद्ध ८८ रनको इनिङ्स खेलेका थिए ।

६ फिट २ इन्च अग्ला पारसले एकदिवसीय खेलमा शतक प्रहार गर्ने पहिलो नेपाली खेलाडीको कीर्तिमान पनि आफ्नै नाममा लेखाएका छन् । युएईविरुद्धको तेस्रो तथा अन्तिम एकदिवसीय खेलअघि पारसले भनेका थिए, 'एकदिवसीय खेलमा नेपालको तर्फबाट शतक भएको छैन । शतक भएको हेर्ने मन छ, के थाहा अर्को खेलमा हुन्छ कि ?'

नभन्दै शतक हेर्ने पारसको इच्छा पूरा भयो र त्यो अरूले होइन, पारस आफैँले हाने । पारसले ९६ बलमा १३ चौका र एक छक्काको मद्दतमा शतक प्रहार गरे । पारस ३८ ओभर ५ बलमा एक सय १५ रन बनाउँदै एलबीडब्लु आउट भए । पारसको नाममा अर्को कीर्तिमान पनि छ । उनी एकदिवसीयमा दुई अर्धशतक प्रहार गर्ने पहिलो नेपाली खेलाडी पनि हुन् । ने

"सीमान्तकृत बालबालिकाका
शिक्षाको लागि सहयोग गरौँ ।
उनीहरुका सपना हामी पुरा गरौँ ।"

---

www.hiteri.org
मा गई डोनेट गर्नुहोस् ।




नेपालकै पहिलो Online
Crowdfunding Platform

: /hitericrowdfunding
: /hiterifoundation
: @hitericrowdfunding
: 9818499565

"सामाजिक बिकासमा मितेरी,
हामी सबैको हितेरी" ।

रङ

# थिएटर स्कुल जानुजस्तै

**गोकर्ण गौतम**

तस्बिर : सरोज बैजु

भारतको पुनामा पढ्दै ताका आरोहण गुरूकुलको चर्चा सुनेकाले बुबासँग *बाघभैरव* नाटक हेर्न पुगे, कार्म । नाटक हेर्दै गए, राम्रो-नराम्रो छुट्याउन सकेनन् । यतिचाहिँ निश्चिन्त भए, मेरो जिन्दगी यही हो । त्यतिबेला अलमलमा थिए, उनी । आर्मी बन्न चाहन्थे तर सशस्त्र द्वन्द्व चलिरहेकाले अभिभावकबाट स्वीकृति मिलेन ।

अरू क्षेत्रमा रूचि थिएन । पढाइमा औसत मात्र । के-कसो गर्ने निर्णय लिन सकिरहेका थिएनन् तर *बाघभैरव*ले अगाडि बढ्नुपर्ने गोरेटो देखाइदियो ।

उनका बुबा र गुरूकुलका सुनील पोखरेलबीच चिनजान थियो । त्यसैले गुरूकुलमै बसेर नाटक सिक्ने बन्दोबस्त मिलाइदिन बिन्ती बिसाए । अचम्म के भने, नाटक हेरेको रात गुरूकुलमै बिताए, दुई-चार साथी बनाए, भोलिपल्ट अडिसन भयो, छानिए । भन्छन्, 'त्यति छिट्टै गुरूकुलको होस्टलमा बस्न पाउनु जीवनकै ठूलो उपलब्धि हो भन्ने लाग्छ ।'

गुरूकुलले कार्मलाई अभिनय मात्र सिकाएन, जीवन बाँच्ने र सोच्ने शैली पनि सिकायो । त्यही 'ब्याकअप' का कारण हुनुपर्छ, नेपाली रंगमञ्च मात्र होइन, सिनेमामै कार्म प्रभावशाली अभिनेताका रूपमा स्थापित भएका छन् । *सानो संसार*देखि *कबड्डी कबड्डी कबड्डी*सम्म आइपुग्दा फिल्मको संख्या २५ पुगेको छ । हरेक फिल्ममा भिन्न भूमिकामा देखा पर्न खोज्छन् । अनि हेर्ने जोकोहीले उनको चरित्रलाई अनुभूत गर्न सक्छन् ।

*कबड्डी कबड्डी कबड्डी*को घामड प्रेमीको भूमिकाले उनलाई थप लोकप्रिय बनाएको छ । भन्छन्, 'नाटकमा मेरो कामबाट धेरै हदसम्म सन्तुष्ट छु । तर फिल्ममा जति गर्नुपर्ने हो, सकिरहेको छैन ।' यसको कारणचाहिँ यस्तो रहेछ, स्टेजमा चढेपछि कलाकार पूर्ण स्वतन्त्र हुन्छन्, कहीं-कतैबाट कसैको रोकतोक हुन्न । तर फिल्म टिमवर्क हो, सेटमा निर्देशकको खटन हुन्छन्, पोस्ट प्रोडक्सनमा सम्पादकको । हलसम्म आइपुग्दा चरित्रको प्रभावकारिता र अभिनयको कौशल खस्कँदै जान्छ ।

गुरूकुलमै थिए, एक दिन पत्रिकामा 'कलाकार चाहियो' बेहोराको विज्ञापन देखे । फिल्म रहेछ, *सानो संसार* । अडिसन दिन पुगे । अरू त परको कुरा, फिल्मका निर्देशक आलोक नेम्वाङलाई पनि चिन्दैनथे । तर तीन चरणको अडिसनपछि मुख्य भूमिकामा कार्म नै छानिए । गुरूकुलको तीन वर्ष बसाइले कलाप्रति उनको दृष्टिकोण गहिरो र फराकिलो बनाएको थियो । त्यो अपेक्षा नेपाली फिल्मबाट पूरा हुँदैनथ्यो । कथावाचनदेखि अभिनयशैलीसम्म खोटैखोट देख्थे । उनी भन्छन्, 'हामीलाई फिल्म कलाको खराब माध्यम हो भन्ने थियो । तर फिल्ममा काम गरेर कायापलट गर्नुपर्छ भन्ने जोश थियो । *सानो संसार*मा मैले त्यही उत्साहले काम गरें ।' काम गर्न थालेपछि बल्ल तत्त्वबोध हुन थाल्यो, फिल्म अब्बल हुन टिम नै अब्बल हुनुपर्छ, अभिनेताले मात्रै माखो मार्न सक्दैन । यद्यपि परिवर्तनका लागि आफ्नो तर्फबाट सक्दो प्रयास गरेको उनी बताउँछन् । कार्म तिब्बती शब्द हो, जसको अर्थ हुन्छ- तारा । नामजस्तै उनी सकेसम्म उज्यालो छरिरहन खोज्छन् ।

*सानो संसार*पछि *एक दिन एक रात, फस्ट लभ* र *मृगतृष्णा* खेले । 'ड्रिम प्रोजेक्ट' *गुडबाई काठमाडौं* अझसम्म रिलिज नहुँदा आफूलाई अभागी ठान्छन् । बाँच्नका लागि अर्को विकल्प थिएन । त्यसैले चरित्र मन नपर्दा-नपर्दै खेल्नुपर्‍यो । फिल्म फ्लप होस् वा हिट, उनलाई कहिल्यै कामको अभाव भएन । भन्छन्, 'एउटा एक्टरले पूरै फिल्म राम्रो बनाउन सक्दैन, आफ्नो भूमिकाचाहिँ बलियो बनाउन सक्छ । मेरो प्रयास त्यसमै रहन्छ ।'

फिल्ममा व्यस्त भए पनि मूलघर अर्थात् रंगमञ्चबाट टाढा भएनन् । यसबीच *कोर्टमार्सल, वेटिङ फर गोदो, मेटामोर्फोसिस, गड अफ कार्नेज*सहित एक दर्जन नाटक खेले । भन्छन्, 'थिएटर मेरा लागि फेरि स्कुल जानुजस्तै हो । हरेक पटक नयाँ कुरा सिक्न पाइन्छ । नत्र त आफू रित्तिएझैं छटपटी हुन्छ । आत्मिक सन्तुष्टिका लागि पनि नाटक खेल्छु ।'

फिल्म र नाटकबाट फुर्सद मिल्नासाथ पाटनस्थित म:म किङमा भेटिन्छन्, कार्म । यो उनको पारिवारिक व्यापार हो । नजिकै उनीहरूकै होटल हिरण्य छ । त्यहाँका पाहुनालाई एयरपोर्ट लिन र छाड्न जाने मात्र होइन, रेस्टुराँमा अर्डर लिन, सर्भ गर्न र भाडा माझ्न भ्याई-नभ्याई हुन्छ । कतिपय साथीभाइ र होटलका पाहुना भन्ने गर्छन्, 'हिरो भएर पनि यस्तो काम गर्ने ?' उनी मुस्कुराउँछन् र सोध्छन्, 'हिरोले गर्न नहुने भन्ने छ र ?'

रेस्टुराँमा उनी अरूभन्दा वेटरको काम गर्न रूचाउँदा रहेछन् । अभिनेताका रूपमा स्वार्थ लुकेको छ, त्यसमा । नयाँ मान्छेसँग प्रत्यक्ष अन्तरक्रिया गर्दा चरित्र निर्माणमा सघाउ जो पुग्छ । बाइकिङमा उनको उस्तै दिलचस्पी छ, तिहारलगत्तै ५५ दिने बाइक यात्रामा निस्कँदै छन् । काठमाडौंबाट कोलकाता, चेन्नाई, गोवा, अहमदावाद हुँदै जम्मुसम्म फन्को मार्ने तय भएको छ ।

“

गुरुकुलले कार्मलाई अभिनय मात्र सिकाएन, जीवन बाँच्ने र सोच्ने शैली पनि सिकायो । फिल्ममा व्यस्त भए पनि मूलघर अर्थात् रंगमञ्चबाट टाढा भएनन् ।

फिल्मी अभिनयमा १२ वर्ष बित्यो तर उनलाई घरिघरि लाग्दो रहेछ, मैले जति गर्न सक्छु र गर्नुपर्ने हो, त्यति गर्न सकिरहेको छैन । त्यो उत्कट अभिलाषा नेपालमा पूरा हुने सम्भावना न्यून छ । त्यसैले अब नेपाली फिल्मको सीमितताबाट बाहिर निस्कँदै छन् । विदेशी प्रोजेक्टमा अडिसन दिने गृहकार्यमा जुटेका छन् । नेपाली, नेवारी, हिन्दी र अंग्रेजीमा पोख्त छँदै थिए, अहिले फ्रेन्च भाषा सिक्दै छन् । भन्छन्, 'अब जहाँ गएर पनि आफ्नो अभिनयको परीक्षा दिन तयार छु । कति सफलता हात लाग्छ, थाहा छैन तर मेरो प्रयास शतप्रतिशत रहनेछ ।' ने

# भाइ, तँ गइस् !

[ संस्मरण ]



हरिहर तिमिल्सिना

कहिलेकाहीं मानिस आवाज खोसिए जसरी मृत्युको बबन्डरलाई चुपचाप हेरिरहन अभिशप्त हुन्छ । दशा लागेका बेलामा आफ्नै छायाले पनि तर्साउँछ मान्छेलाई । झारपात पनि विषालु बन्छ । कीराफट्यांग्रा पनि यमराजको रूप धारण गरेर आउँछन् । जीवन कमजोर धागोमा झुन्डिएको गह्रौं सपनाझैं, सानै हावाको झोक्काले चुंडिएर चकनाचुर बन्न सक्छ ।

०५६ असोजको कुरा हो, यो । घाम उदाए जसरी नेपाली आकाशमा दसैं उदाउँदै थियो । लेखनाथ बाले भनेजस्तै हिलोमैलो हटिसकेको थिएन । आनन्दको वर्षा पनि भइरहेको थिएन । बरू घाम र झरीको लुकामारी चलिरहेको थियो । झरी पाकेको मकैको दुस्मन थियो तर भर्खर नुहिन लागेको धानका लागि भने अमृत । मकै भाँचेर झुत्ता बाँधेर थांग्रो नहालेसम्म दसैंको चहलपहल आउँदैनथ्यो । मकै थन्काएर पाट चुट्नु थियो । बाबियो काट्नु थियो । लठारो बाट्नु थियो । कैंची बाँध्ने डोरी र गरालोको जोहो गर्नु थियो । सकेसम्म घरबारी खनेर मूला-तोरी-रायो छर्नु थियो । खेतमा धान बल्ल नुहेको थियो । धान थन्काउने चटारोले दसैंमा थप बोझ पर्नेवाला थिएन । यो ठूलाबडाको तानाबाना थियो ।

भुराहरूको तनाव अर्कै थियो । दसैं सँगसँगै जाँच पनि आइरहेको थियो । दसैं आएको रमाइलोलाई जाँच आएको नरमाइलोले छोपिरहेको थियो । उज्यालो जूनलाई अँध्यारो ग्रहणले छोपेजस्तो । घटस्थापनालाई जाँच सकिने गरी रूटिन निकालेका हुन्थे स्कुलहरूले । जाँच सकिएपछि मात्रै लुगा, जुत्ता, र चंगाको अध्याय सुरू हुन्थ्यो । लुगा, जुत्ता र चंगा आफ्नो वशका कुरा थिएनन् । त्यसका लागि पैसा चाहिन्थ्यो । पैसा मात्रै भएर पनि नहुने । बुबाआमाको फुर्सद पनि चाहिन्थ्यो । कहिलेकाहीं फुर्सदले मात्रै पनि काम नहुने । मुड पनि चाहिन्थ्यो । त्यसमाथि बाटो काट्नै लाग्दा जेब्रा क्रसिङमा रातो बत्तीजस्ता विभिन्न सर्त तेर्सिएका हुन्थे । यसपालिको जाँचमा यति नम्बर ल्याइस् भने दसैंमा यो वा त्यो किनिदिउँला टाइपका ।

भुराहरूले आफैं गर्न सक्ने केही काम पनि थिए । जस्तो, रूख चढेर सोइसेला खेल्ने । लहरामा झुन्डिएर पिङ खेल्ने । घरबाट पाट चोरेर वा कसैको बारीबाट बाबियो ल्याएर डोरी बाट्ने । ती डोरीबाट रूखका हाँगामा पिङ हाल्ने । बाक्लो थोत्रो चप्पल काटेर लट्टाई बनाउने । प्लास्टिकबाट चंगा बनाउने । कालीमाटी र चिम्टे माटो खोजेर मोटर गाडी बनाउने । यी सबै गर्न पनि त्यति सजिलो थिएन । मिलाएर बनाउन सबैको ढंग पुग्दैनथ्यो । एउटा खुबीवाल केटो वा केटीले यी सबै कामको नेतृत्व लिनु जरूरी थियो ।

हो, यस्तै काम गर्ने एउटा केटो थियो- हाम्रो संयुक्त परिवारको रोशन । जनक तिमिल्सिना, वर्ष १३ । हाम्रा माहिलो बुबाको छोरा । साथीहरूलाई हँसीमजाक गरेर रमाइलो दिने । कहिले हौस्याउने । कहिले अलिअलि घुर्काउने । सबैको प्यारो । ठूलो टाउको । फराकिलो निधार । मिलेका दाँत । काला, गाढा र ठूला आँखा । कालोकालो वर्णको मुखमण्डल । बढाइचढाइ कुरा गरेको होइन । साँच्चै, उसको स्माइल नै किलिङ थियो । ११-१२ वर्षको उमेरमै हिरो देखिने ।

उसको एउटा बानी नराम्रो थियो । बेलामौकामा दाहिने हातको चोरी औंला चुस्थ्यो- बाछाले माउको थुन चपचप पारे जसरी । ऊ दूध कटुवा थियो । ऊ जन्मिएको १८ महिना नपुग्दैमा बहिनी जन्मी । आमाको दूध नपाए पनि उसलाई गाईभैंसीको दूधको कहिल्यै कमी भएन, न त पारिवारिक मायाको । गोठमा जहिले पनि ३-४ वटा भैंसी लैना हुने । २०-२२ जनाको संयुक्त परिवार । ८-१० जना त भुराभुरीकै जमात । खायो, चल्यो, उफ्रियो, रमायो । हाम्रो मिलिजुली परिवारको जिन्दगी उत्सवमय थियो ।

०५६ सालमा ऊ ६ कक्षा पढ्थ्यो । घटस्थापनाको अघिल्लो दिन थियो सायद । त्यही दिनबाट उसको जाँच सकिएको थियो । किशोर समूहले स्कुलबाट फर्किंदा नै पिङ हाल्ने योजना बनायो । प्रायः फूलपातीका दिन बा र काकाहरू नै लिंगे पिङ हाल्दिनुहुन्थ्यो । फूलपातीसम्म कसले कुरोस् ! जनकको नेतृत्वमा पिङ टोलीको निर्माण भयो । पिङ हाल्ने उपयुक्त रूखको खोजीमा १०-१२ जना निस्किए । घरदेखि अलि माथि हाडेगेडीका दुई अजंगका रूख थिए । उपयुक्त हाँगो ठम्याउन जनक रूख चढ्यो । हाँगा पन्छाउँदै माथि पुगेपछि उसले अरिंगालको गोलो देख्यो । ए भागओ ! भागओ ! यहाँ अरिंगालको गोलो रहेछ । अरू भाग्न थाले । ऊ के गरोस् ! अरिंगालहरू ऊमाथि खनिन सुरू गरिसकेका थिए । जसोतसो ऊ रूखबाट फाल हान्यो । सँगसँगै अरिंगालको गोलो पनि ऊमाथि बर्सियो । ऊ रोयो, करायो चिच्यायो । जे होस्, उसले अरूलाई भगायो । भाग्दाभाग्दै पनि अरू १०-१२ जनालाई टोकिहाल्यो । क्रन्दन सुनेर बुबा र काकाहरू पुग्नुभयो । उसलाई घर ल्याएर पिंढीमा सुताइयो । जतिसक्यो छिटो अस्पताल पुऱ्याउनुपर्ने हुंदा एम्बुलेन्सलाई फोन गरियो ।



हे मेरो भाइ ! तँ त गइस् । तैंले अल्पायुमा छाडेर गएका सम्झनाका असंख्य अरिंगालहरूले हामीलाई अझै पनि डसिरहेका छन् ।

एम्बुलेन्स आएन । त्यस दिन उपत्यका बन्द थियो । देशमा जनयुद्ध जारी थियो । बन्द, हड्तालको हिसाबकिताब थिएन । सहरमा एउटा सरकार थियो, जंगलमा अर्को । हामीलाई सहरको सरकारमाथिको भरोसा भत्किसकेको थियो । बरू जंगलको सरकारमाथिको भरोसा भर्भराउँदो भएर आएको थियो । टायर, धुवाँ र अवरोध । त्रास, अत्यास र अनिश्चितताका साथमा सडक धुवाँमय थियो । भक्तपुरबाट हाम्रो गाउँ सुडालसम्म पुग्न करिब ५ किलोमिटरको कच्ची, साँघुरो र जर्जर सडक थियो । एक हिसाबले सडक नै बिरामी थियो । मेरो घरसम्म त मोटर पनि पुग्दैनथ्यो । तात्कालिक सुडालको निधारमा एउटा ट्याग पनि लगाइएको थियो । पुलिस आर्मीको नजरमा उपत्यकामा सबभन्दा बढी माओवादी भएको गाउँ सुडाल थियो । सुडाल ब्ल्याक लिस्टमा छ भन्ने सुनिन्थ्यो । सेनाले घरघर छिरेर बेलाबेला खानतलासी गरिरहन्थ्यो ।

आउन सक्ने ठाउँसम्म पनि एम्बुलेन्स आएन । स्ट्रेचरमा हालेर अस्पताल कुदाइयो । नजिकैको भक्तपुर अस्पताल पुऱ्याउन जति छिटो हिंडे पनि डेढ घन्टा लाग्थ्यो नै । यी सबै घटना हुंदा म भने घरमा थिइनँ । दिउँसो ४ बजेतिर भक्तपुर अस्पताल पुऱ्याइएछ । अस्पतालले यहाँ उपचार हुंदैन कान्ति लैजानू भनेछ । सडकमा आगो बलिरहेकै थियो । अवरोध कायम नै थियो । जसोतसो एम्बुलेन्समा हालेर कान्ति लैजाने तर्खर भएछ । जनकले जतिखेर पनि 'पानी पानी' भन्ने रहेछ तर त्यहाँका डाक्टरले पानीचाहिं कुनै हालतमा पनि नदिनू भनेका रहेछन् । मेरा कान्छा काका अहिले पनि भन्नुहुन्छ- 'जनकले पटक-पटक प्लिज मलाई पानी दिनु । प्लिज ! प्लिज ! प्लिज ! भनेर धेरैचोटि बाटोभरि याचना गरिरह्यो रे ।

कान्ति पुऱ्याएको एकछिन पछाडि ऊ कराउन, चिच्याउन छाड्यो । उसले पानी पनि मागेन र प्लिज ! प्लिज ! भनी याचना पनि गरेन । उसको सास बन्द भइसकेको रहेछ । यसरी दसैंको मुखमा अरिंगालको आक्रमणले हामीले परिवारको एउटा प्यारो सदस्य गुमायौं । हामी लाचार बनेर उसको मृत्युलाई हेरिरह्यौं । सायद उसलाई त्यही एक दिन दुःख र पीडा भयो । हामीलाई जुनीभरका लागि उसको पीडा सरेको छ । प्रत्येक वर्ष दसैंसँगै हाम्रो घरमा एउटा पीडादायी स्मृतिले प्रवेश गर्ने गर्छ ।

यस्तो लाग्छ, यो असोज महिना नआए पनि हुने । २० गते त झन् आउँदै नआए हुने । तर हरेक साल यो आउँछ ।

हे मेरो भाइ ! तँ त गइस् । तैंले अल्पायुमा छाडेर गएका सम्झनाका असंख्य अरिंगालहरूले हामीलाई अझै पनि डसिरहेका छन् । ने

# कथामा सूक्ष्म अन्तर्दृष्टि

**ईश्वर बुढाथोकी**

नेपाली साहित्यमा समग्र जीवनको अन्वेषण र विमर्श गरेर कथा लेख्ने दुर्लभ कथाकार हुन्, विजय मल्ल । निम्न तथा मध्यमवर्गीय जीवनका विघटित मानसिकता, अन्तरविरोध, असंगति, तथाकथित आधुनिकता, परिवर्तनशील सम्बन्धबीचको अस्पष्टता र यौनकुण्ठासँगै विज्ञानलाई समेत कथामा व्यक्त गर्ने सूक्ष्म अन्तरदृष्टिले सम्पन्न कथाकार पनि हुन्, मल्ल । उनका लागि कलम यस्तो औजार थियो, जसको सहायताले उनी अनुहारले लुकाउने कुरालाई मात्र होइन, मुकुन्डोमा लुकेका अनुहार पनि कोट्याई-कोट्याई निकाल्थे । मानिसको संवेगात्मक अस्थिरतालाई भलिभाँती बुझेका उनले मान्छेका अचेतन मनको गुफामै पुगेर त्यहाँ लुकीछिपी बसेका मनोभावना शब्दमा उतारेर ल्याउँथे ।

तिनै कथाकार विजय मल्लको कथासंग्रह *मान्छेको नाच* सार्वजनिक भएको छ, अविनाश श्रेष्ठको सम्पादनमा । नेपथ्यमा रहेका धेरै लेखकलाई मञ्च दिएर साहित्यिक क्षेत्रमा स्वीकृत र स्थापित गर्न मद्दत गरेका सम्पादक श्रेष्ठको कुनै बेला मल्लसित गहिरो अन्तरंग सम्बन्ध थियो । र, यो किताब त्यही सम्बन्धको नाता-प्रमाणित पनि हो । विजय मल्लबाटै कथाहरूको संकलन र सम्पादनको जिम्मा पाएका अविनाशले विजय छँदै यस पुस्तक प्रकाशन गर्ने जमर्को गरेका थिए । तर यसको पाण्डुलिपि कपटको रस्साकस्सीमा अल्झिएकाले किताबको रूप लिनै पाएन । अन्योलको गर्तमा लामो समय रहेको यसलाई प्रकाशनमा ल्याउन फेरि अविनाशले नै हात बढाए ।

*मान्छेको नाच*मा ५६ वर्षको कालक्रममा लेखिएका १७ कथासँगै एउटा लघु उपन्यास पनि समावेश छ । यो किताब पढ्दा कतिपय बेवारिसे सन्दर्भको सनाखत नै हुन्छ । यसको उदाहरण शीर्षक कथा *मान्छेको नाच* पनि हो । अनौठो ऐँठनले अठ्याएर ग्रन्थि परिवर्तन भएको एक नर्तकको मनोदशाको प्रत्यक्ष दर्शन नै हुन्छ, यसमा । शास्त्रीय नृत्यमा पारंगत मान्छेलाई पहिले गह्रौं मुखुन्डो लगाएर लाखेको नृत्य गर भन्दा अपमानबोध गर्छ र पछि त्यही नृत्यमा उसले अपारको सन्तुष्टि प्राप्त गर्छ । अर्को कथामा बाहुन डिठ्ठा र झमेली कामीलाई जेलभित्र एउटै हत्कडीमा बाँधेर यातना दिन्छन् । चमारसित बाँधिएको बाहुन डिठ्ठाले छुवाछूतका कारण खाना खान सक्दैन । तर चमारले बाहुनलाई भोकै राखेर आफू पनि खाँदैन । कथामा अस्तित्व संकटको अवस्था सजीव छ ।

कथाको कथ्यलाई अपठनीय हुनबाट जोगाउँदै अनेकन तानाबानामा अल्झाउने मल्लको विशिष्ट सीप *मान्छेको नाच*का कथाहरूमा पनि यथावत देखिन्छ । लेखेटिएको जन्ती, सन्नीपात, मुक्त, दस रूपैयाँ, खेल, जदुकृष्ण मन्योजस्ता केही कथा आकर्षित गर्ने खालको खतरै पनि छैनन् तर तिनलाई कथाकारको कथ्ने शैली र सामर्थ्यले लायकको कथा बनाएको छ । बिदेसिएका सन्तानको न्याश्रो मेट्न कुकुरका बच्चाको सहारा लिने दम्पतीको कथा माया पोख्ने भाँडो, दाजुले बिरामी भाइसँग बुद्धिचाल खेल्दा चालेको अन्तिम चाल कथा, पर्खाल कथाको आत्मविश्वासी कैदी भान्साघरे माइलाको जेलब्रेक गर्ने तारतम्य र प्रेम सबैको जीवनमा अभिभाज्य तत्त्वको रूपमा रहेको बुझाउने दिदीबहिनीको कथासँगै परिशिष्टमा राखिएको दुई विज्ञान कथा प्रवेश निषिद्ध देश र इन्जिनियरको टाउको पाठ्य हिसाबले खुराकिलै छन् । कथा २४० नम्बरको ट्याक्सीमा त उनको झुकाव बेग्लै देखिन्छ । कारण, त्यसमा चढ्ने कुनै रूपवतीले उनको मानसिक जगत्मा तुफान मच्चाइदिएकी हुन्छिन् । मनोवैज्ञानिकतालाई केलाएर लेखिएको मुक्त कथा पनि कम्ताको छैन । यसमा श्यामदासलाई भक्तपुरको पुर्ख्यौली थलो बेचेपछि यस्तो लाग्छ- मानौं, ऊ नाग हो र उसले मणि बेचेको छ ।

संग्रहमा एउटा लघु उपन्यास छ, श्रीमती शारदा । यसलाई विजय मल्लले बोलेर टिपाएका थिए । यसको प्रमुख पात्र प्रदीप्तमानले नसाको सुरमा आफ्ना विरोधी मित्रकी श्रीमतीलाई बलपूर्वक तानेर ल्याएपछिको कहानी छ । उपन्यासको प्रवाहमा कतै पनि गतिरोध छैन । घृणालाई प्रेममा बदलेर कलात्मक रूपमा उत्कर्ष दिने प्रयास गरिएको छ । तथापि प्रदीप्तमानले एकान्त सडकमा पाशविक तरिकाले घिसार्दै लैजाँदा शारदाको फरिया मुजा परेर भुइँमा खसेको र पेटीकोट मात्र बचेको हुन्छ । बदला लिन प्रदीप्तमानको हत्यासम्म गर्छु भन्ने शारदाले त्यतिबेला किन प्रतिकार गरिन् ? घाउचोटले आहत हुनुपर्ने किन भइन् ? श्रीमती हराएपछि केशरबहादुरले किन खोजेनन् ? शारदा र केशरको सम्बन्धबारे किन प्रस्ट पारिएन ? त्यसो त, हतियार शीर्षकको कथामा पनि चम्पाका श्रीमान्को हत्यारा र उनको वास्तविकता खुलेको भए हुन्थ्यो भन्ने लाग्छ । त्यसमा जुद्धबहादुरलाई हतियारभन्दा बलिको बोको बनाइएको छ । मान्छेको नाचमा सम्पादक श्रेष्ठले कथाकार मल्लको कथाकारिताको मूल मर्मलाई जतन गरिदिएका छन् । संख्यात्मक हिसाबले आफ्नो जीवनकालमा सम्भवतः ४० वटा मात्र कथा लेखेका विजयले थोरै भए पनि राम्रा कथा लेखेका छन् । ने




***मान्छेको नाच***
कथाकार : **विजय मल्ल**
सम्पादक : **अविनाश श्रेष्ठ**
प्रकाशक : **फाइन प्रिन्ट**
मूल्य : **३२५ रुपैयाँ**












# भौतिकवादी बुद्ध

डाक्टरको छोरा मरेको छ । लासमा घोप्टेर विलाप गरिरहेकी छन्, पत्नी । छोराको सद्‌गत नै नगरी मानवताका नाताले आग्रहवश अर्को युवककी पत्नीको उपचार गर्न पुग्छ । तर युवककी पत्नीले अर्कै पुरूषसंग जान लोग्नेसँग त्यो प्रपन्च गरेकी हुन्छे । वास्तविकता थाहा पाएर डाक्टर रिसले चुर हुन्छ । डाक्टरको त्यो असीम उदारता र संवेदनशीलतालाई नबुझी युवक धनको तुजुक देखाउँदै सोध्छ, 'किन रिसाउँछौ ? मैले तिमीलाई त्यसै बोलाएको छैन । भन, तिम्रो फिस कति भयो ?'

यो दृश्य कथासाहित्यका अनुपम कारिगर आन्तोन चेखबलिखित 'द इनेमी' को हो । ४४ वर्ष मात्रै बाँचेका यी कथाकारले कथामा उतारेको १९ औं शताब्दीको जारकालीन रूसी जीवनचित्र आज पनि सान्दर्भिक भइदिन्छ । उनका कथा संकलन **सेलेक्टेड सर्ट स्टोरिज**मा समाजले वास्ता नगरेका, खुम्चिएर, लुकेर, हेपिएर बसेका, भित्रभित्र पीडा र दुःखले जलेका व्यक्तिको अशान्ति, कोलाहल, दुःखको चित्र र उच्च मानवीय भाव तटस्थ रूपमा प्रस्तुत गरिएको छ ।

थोरै अपवादलाई छाड्ने हो भने हामीकहाँ यात्रा साहित्य कंगाल छ । ती कट्‌मिरा भावना र अज्ञानका पुलिन्दा बनेका छन् । रत्नपार्कदेखि टेकुसम्मको टेम्पुयात्रालाई पनि कनीकुथी साहित्य बनाइदिने परिवेशमा जनकलाल शर्माको **कौतुकमय डोल्पो** यात्रा साहित्यको उदाहरणीय किताब हो । उत्खननका लागि ०२६ सालमा जाँदा डायरी शैली लेखिएको छ । डोल्पाको भूगोल, इतिहास, पुरातत्त्व, जीवनशैली, रहनसहन, प्राकृतिक सौन्दर्य र मानवीय भावनाको सांगोपांगो चित्र सिनेमाझैं हाम्रा आँखाअगाडि आउँछन् ।

काठमाडौंबाट प्रस्थानदेखि जुम्ला, तिब्रीकोट र डोल्पासम्मका हिन्दु परम्पराका पाँच मन्दिर, २३ बौद्ध गुम्बा र एक बोन्पो गुम्बा अनि त्यहाँका जातीय विविधताको अध्ययन, भाषा, संस्कृति, उद्योगधन्दा एवं रहनसहनको जीवन्त चित्रण छ । ५० वर्षअघि उनले गरेको यात्रा वर्णनले त्यो उच्च पहाडी तथा हिमाली जीवनको कठिनता तर अनुपम प्राकृतिक सौन्दर्य र पुरातात्त्विक सम्पदाबारे हाम्रो मनमा असीम उत्सुकता जगाउँछ ।

हामीले बुद्ध नेपालमा जन्मेका हुन् भन्न खर्च गरेको ऊर्जा बुद्धशिक्षा बुझ्न सदुपयोग गरेको भए हाम्रो चिन्तनको धरातल धेरै उँचो हुन्थ्यो । मैले बुद्धको नाम लिनेबित्तिकै मेरा 'मार्क्सवादी' मित्रहरू आगो हुन्छन् । यो बुद्धशिक्षाबारे तिनको निरक्षरताको परिणाम हो । जातिभेदलाई धुलो चटाउने, पूजा, कर्मकाण्डलाई निरर्थक ठान्ने, ईश्वर, परलोक र आत्माको अस्तित्व नमान्ने, आफ्नै शिक्षालाई समेत अन्तिम सत्य नमान्ने, कुनै पनि कुराको स्वतन्त्र र स्थायी अस्तित्व नमान्ने, ज्ञानलाई नै सर्वोपरि ठान्ने बुद्ध दर्शन र भौतिकवादी मानिने मार्क्सवादमा आधारभूत भिन्नता छैन ।

उत्पादनको प्रसंगमा बुद्ध पूरै युटोपियन छन्, जसमा मार्क्स वस्तुवादी लाग्छन् । तर, मानवीय मनको उपचार गर्न बुद्धलाई भेट्ने सायदै कोही छन् । उनी आत्मअनुशासनले आफैँमाथि विजयी हुने मान्छेलाई संसारको कुनै पनि शक्तिले हराउन सक्दैन भन्छन् । बुद्धशिक्षा धर्म नभई दर्शन मात्र हो । बौद्ध दर्शनका इन्साइक्लोपेडिया मानिने भियतनामी बौद्ध भिक्षु थिक न्यात हन्हको **ओल्ड पाथ, हवाइट क्लाउड्स** पढिसकेपछि बुद्धबारे मेरो धारणा यस्तो बनेको हो ।

शान्ति अभियन्ता र कविको समेत परिचय बनाएका हन्हको यो किताब बुद्धको जीवन र दर्शन बुझ्न अत्यन्त उपयोगी छ । बुद्धको जीवनी भए पनि सुललित उपन्यासजत्तिकै सरस र सरल छ, यो । आख्यानपरक वर्णन र पूर्वदीप्ति शैलीले पनि यसलाई औपन्यासिक बनाएको छ । बुद्धलाई संबोधी प्राप्त हुंदाको सजीव तस्बिर खिचिएको यो पुस्तकले बुद्धको जीवनी र दर्शन सहजै बुझाइदिन्छ ।

हावाले हल्लाइरहेका हरिया पातमा घामको प्रकाश परेको हेर्दा- कुनै पनि चीजको अस्तित्व स्वतन्त्र हुंदैन, ती एक अर्कामा निर्भर हुन्छन् भन्ने निष्कर्षमा पुग्छन् उनी । र, उनलाई जीवनका चार आर्य सत्य र अष्टांग मार्ग सुझ्छ ।

बुद्धलाई भेट्न आएकी वैशालीकी अनुपम सुन्दरी आम्रपालीको सौन्दर्यमा भिक्षुद्वय कालुदयी र नागसमल पानीपानी हुन्छन् । उनी गइसकेपछि दुई भिक्षुको मनस्थिति बुझेर बुद्ध भन्छन्, 'भिक्षु हो, करूणापूर्ण आंखाले हेर्न सकियो भने झट्ट हेर्दा सुन्दर वस्तु देखेर आसक्त र कुरूप वस्तुलाई देखेर घृणाभाव पैदा हुंदैन । करूणाको अर्थ हो, निःसर्त प्रेम अर्थात् प्रेमको बदलामा कुनै पनि अपेक्षा नगर्नु । मुक्त हृदय न सुन्दर वस्तुसँग सम्मोहित हुन्छ, न त कुरूप वस्तुसित विरक्त ।' जीवनका जटिलतम दर्शन बुद्धले सजिलै बुझाइदिन्छन् ।

■ **प्रस्तुति : गुरुङ सुशान्त**

# 'किशोरीको शत्रु जंक फुड'

६ प्रश्न | बोनिता शर्मा

**काठमाडौं, भद्रवासकी बोनिता शर्मा, २८, *बीबीसी* विश्व सेवाको प्रभावशाली एक सय महिलाको सूचीमा अटाउन सफल भएकी छन् । महिलाको स्वास्थ्यमा परिवर्तन गर्ने विचारसहित सोचाइ : युथ फर न्युट्रिसन संस्थाले गरेको कामको आधारमा उनलाई सूचीमा समेटिएको हो ।**

**तपाईंलाई प्रभावशाली महिलाको पंक्तिमा उभ्याउने तागत के हो ?**

हामीले आमा र किशोरीहरूको समस्यालाई नयाँ ढंगले समाधान निकाल्ने खोज गरेका छौं । यसमा रंगीबिरंगी मालाका माध्यमबाट महिलाका स्वास्थ्यसम्बन्धी समस्याको समाधान खोजेका छौं ।

**यसको प्रभाव गज्जबै छ त ?**

हामीले मालामार्फत आमाहरूलाई ज्ञान दियौं । यति सानो विचारले तिनमा पोषणसम्बन्धी ज्ञानमा नसोचेको परिवर्तन आयो । किशोरीहरूमा पनि महिनावारीसम्बन्धी ठूलो समस्या छ ।

**त्यसको कारण ?**

किशोरकिशोरीको स्वास्थ्यको ठूलो शत्रु जंक फुड हुन् । हामी जति पनि स्कुलमा गयौं, त्यहाँ जंक फुडको महामारी पाइयो । चाउचाउ, चटपटे, कोकजस्ता अस्वस्थ तयारी खानाले हाम्रो भविष्य रोगी बनाइरहेको छ ।

**सबै जंक फुड हानिकारक हुन्छन् ?**

जंक फुड खाँदा पेट भरिएजस्तो हुन्छ तर शरीर भोकै हुन्छ किनभने त्यसमा शारीरिक विकासका लागि आवश्यक पोषण तत्त्व पाइँदैन । ती खानेकुरा कमसल कच्चा पदार्थद्वारा उत्पादित हुन्छन् । किशोरावस्थामा यसको असर नदेखिए पनि पछि मधुमेह, मोटोपना, मुटु रोगजस्ता समस्या आउँछन् ।

**जंक फुडको महामारीमा सरकारी नीतिको खोट देखिँदैन ?**

सरकारले विद्यालयहरूमा यस्ता खानेकुरामा प्रतिबन्ध लगाएको छ । तर हामी गएका धेरै विद्यालयमा बच्चाहरूले चाउचाउ नै खाइरहेका थिए । किशोरीलाई आइरन चक्की दिने सरकारी नीति छ, पाएका छैनन् । सेलिब्रिटीहरूले जंक फुड प्रवर्द्धन गरेकाले पनि धेरैले यस्ता खानेकुरा खाइरहेका छन् ।

**जंक फुड रोक्ने उपाय के त ?**

गाउँमा स्थानीय खान्कीको महत्त्व नबुझ्दा र सहरमा अधिक जंक फुडले कुपोषण बढिरहेको छ । यसबारे अभिभावक, शिक्षक, विद्यार्थीलाई ज्ञान दिने अभियान चलाउनुपर्छ ।

**▪ मनबहादुर बस्नेत**

# बलुचिस्तान व्यथा

पाकिस्तानी प्रान्त बलुलिस्तानमा तालिवानद्वारा चार भारतीय जासुस समातिन्छन् । जासुसको सामूहिक हत्या गर्नै लाग्दा पाकिस्तानी खुफिया एजेन्सी 'आईएसआई' का अफिसरले तालिवानका नेता मुल्लाह खालिदसँग बिन्ती बिसाउँछन्, 'यिनीहरूलाई नमार । मसँग एउटा योजना छ, जसले एक सातामै संसारले तालिवानको वर्चस्व र आतंकको अन्दाज पाउनेछ ।' आईएसआई आफैं भारतको दुस्मन हो तर उसैले किन जासुसलाई बचाउँदै छ ? नेटफ्लिक्सको नयाँ वेवसिरिज *बार्ड अफ ब्लड* यही सवालसँगै सुरू हुन्छ ।

*बार्ड अफ ब्लड*को केन्द्रमा चाहिं जासुसको सकुशल रिहाइ गर्ने भारतीय चाल नै छ । सिरिजको विशेषता बुलन्द चरित्रचित्रण हो । जासुसी हर्कत आफैंमा रहस्यमयी मानिन्छ । यसमा निर्देशकले अझ प्रभावकारी ढंगले बुन्ने चेष्टा गरेका छन् ।



*वेव सिरिज : बार्ड अफ ब्लड*

गोली र बम हानाहानका दृश्यांकन पनि आधिकारिक छन् । कथा बलुचिस्तानको भए पनि लद्दाख, राजस्थान र मुम्बईको स्टुडियोमा खिचिएको हो । हिन्दीसँगै उर्दू, अंग्रेजी र पस्तुन भाषाको प्रयोग छ । जासुस कविर र पृथकतावादी लडाइँमा होमिएकी बलुची युवती जन्नतको प्रेम र विछोडको कथा उस्तै दर्दनाक छ । कथावाचनलाई जीवन्त बनाउन कलाकारको पर्फमेन्सले कति अर्थपूर्ण राख्छ भन्ने उदाहरण हो, यो सिरिज । इमरान हासमीको करिअरकै सबैभन्दा चुनौतीपूर्ण चरित्र हो यो, जसमा उनी स्वाभाविक लाग्छन् । सोविता धुलिपला उत्तिकै निपुण लाग्छिन् । संवेदनशील भूमिकामा उनले देखाएको क्षमताले बलिउडमा प्रचुर भविष्य देखिन्छ । घर फर्कने उत्कट चाहलाई तिलाञ्जली दिँदै खतरनाक मिसनमा सहभागी भएको चरित्रलाई विश्वसनीय बनाउन विनितकुमार सफल छन् । गम्भीर राजनीतिक विषयलाई सरल तर रसिलो शैलीमा पस्कन रिभुदास गुप्ता दक्ष लाग्छन् ।

*बार्ड अफ ब्लड*ले पनि बेच्न खोजेकोचाहिं भारतीय राष्ट्रवाद नै हो, जुन पछिल्लो समय बलिउडले खुब पछ्याइरहेको छ ।

**▪ गोकर्ण गौतम**



# चिकेन स्टेसन

कुखुरा नेपालीको रुचाइको मांसाहार हो भन्दा फरक पर्दैन । होइन भने सहरमा खुलेका चिकेन स्टेसन रेस्टुराँलाई हेर्नुस् । हरेक एक किलोमिटरको दूरीमा चिकेन स्टेसन भेटिन्छन् । हिट भएकैले होला, सन् २०१७ मा खुलेको स्टेसन काठमाडौंमा ११ शाखा छन् । स्वादिलो फ्राई चिकेन साथमा सुपथ मूल्यमा । जाने होइन त चिकेन स्टेसन ?

# सदाबहार स्किनी जिन्स

बिस्तारै गर्मीले चोला फेरेर कठ्यांग्रिने जाडो जाग्दै छ । तर फेसन पारखीलाई भने छु मतलब । नपत्याए मोडल अजिना कार्कीलाई नै हेर्नुस् । स्किनी जिन्स र फुलबुट्टे समर सर्टमा उनी हट देखिन्छिन् ।

महेश प्रधान

# कपडा चिन्तन

हरदम कलाकारितामै व्यस्त रहन्छन्, मनीषलाल श्रेष्ठ । जेठ-असारमा उनले ठमेलको दलाइला आर्ट स्पेसमा 'सिरानी' शीर्षकमा एकल प्रदर्शनी गरेका थिए । अहिले उनले धागोले सिएको चित्र र डिजाइनसहितको लामो टापेस्ट्री बुसान बिनालीको सी आर्ट फेस्टिभल-२०१९ मा इन्स्टलेसन गरेका छन् ।

भर्टिकल वेभ शीर्षकको टापेस्ट्री दक्षिण कोरियाको बुसानका नागरिकबाट संकलित १५ सय मिटर लामो कपडाबाट बनाइएको छ । भर्टिकल वेभमा उनले विभिन्न संस्कृति, जनजाति र समुदायलाई एकै ठाउँ ल्याउने जमर्को गरेका छन् । कपडालाई उनी मानिसको दोस्रो छाला भन्न रूचाउँछन् । कपडाले सुरक्षा, सुन्दरता र आराम दिन्छ । १ सय मिटर लामो टापेस्ट्रीमा उनले बढ्दो आध्यात्मिक चेतनालाई इंगित गरेका छन् ।

फेस्टिभलमा मनीषलगायत १२ देशका २१ कलाकारका कलाकृति प्रदर्शनीमा राखिएको छ । ११ असोजदेखि सुरू फेस्टिबल ११ कात्तिकसम्म चल्नेछ ।





# सकसमा साम्राज्ञी

*ड्रिम्स*बाट साम्राज्ञी राज्यलक्ष्मी शाहलाई लामो रेसको घोडा मानियो । तर अरू धेरै कलाकारजस्तै साम्राज्ञीले आफूप्रतिको अपेक्षा पूरा गर्न सकिनन् । फिल्म चयनमा मात्र चुकिनन्, अभिनय पनि खस्कँदै गयो । *ए मेरो हजुर २* र *इन्टु मिन्टु लन्डनमा* बाहेक अन्य फिल्मको व्यापार उत्साहजनक भएन । अहिले त झन् साम्राज्ञी पूरापूर संकटमा छन्, दुई फिल्म लगातार फ्लप भएर । १६ लाख लिएर *मारूनी* खेलिन् तर फिल्मले लगानीसमेत उठाएन । *रातो टीका निधारमा*को हालत अझ खराब रहयो । दुवै फिल्ममा उनीजति चर्चित कलाकार अरू थिएनन् । लगातारको असफलताले होला, साम्राज्ञी फिल्मवृत्तमा खास सक्रिय छैनन् ।

## नोटबुक



गोकर्ण गौतम

# स्वदेशीलाई विभेद




अहिले हलमा तीन फिल्म चलिरहेका छन्, नेपाली *छ माया छपक्कै*, हिन्दी *वार* र अंग्रेजी *जोकर* । *वार*मा ऋतिक रोशन र टाइगर श्राफ बिनाहेल्मेट बाइक कुदाउँछन् । तर स्क्रिनमा लेखिएको हुन्न- 'ट्राफिक नियमको पालना गरौं ।' *जोकर*का मुख्य अभिनेता जोक्युन फोनिक्स चुरोट तानेको तान्यै गर्छन् तर वैधानिक चेतावनी छैन । *छ माया छपक्कै*मा दीपकराज गिरी र जितु नेपालले पनि बाइक चलाउँदा हेल्मेट लगाएका छैनन् । त्यहाँ 'बिनाहेल्मेट सवारी चलाउनु ट्राफिक नियमविपरीत छ' भनेर बडेमाको अक्षर देखिन्छ । मदिरापानका दृश्यलाई निर्बाध छाडिएको छैन । जबकि यी तीनै फिल्मको सेन्सर गर्ने निकाय चलचित्र सेन्सर बोर्ड हो । सिनेमा अभिव्यक्तिको माध्यम हो । त्यसैले संविधानमै अभिव्यक्ति स्वतन्त्रता भएको नेपालमा सेन्सर परिकल्पना हुँदैन । तर सिनेमा सेन्सरको पञ्जाबाट मुक्त छैन । त्यसमाथि स्वदेशी फिल्मलाई बढी चेपिन्छ, विदेशीलाई छाडा छाडिन्छ । स्क्रिनमा अक्षर आउँदा दर्शकको ध्यान दृश्यबाट बिथोलिन्छ । नेपाली फिल्ममा रगतपच्छे भएका दृश्य सकेसम्म सेन्सरले काट्छ, नत्र 'ब्लर' गर्न लगाउँछन् । तर *जोकर*का रगताम्य दृश्यलाई सेन्सरले आँखा चिम्लिएको छ ।

विभेद यत्तिमै सीमित छैन । नेपाली फिल्मको नाम दर्ता गर्ने चलचित्र विकास बोर्डले लफडा गर्छ, कथासारदेखि कलाकार र प्राविधिकसम्मको लम्बेतान सूची बुझाउनुपर्छ । कहिलेकाहीं सेन्सरका पदाधिकारीको समय नपाएर सास्ती झेल्नुपर्छ । तर बिहीबार आएका विदेशी फिल्मको रातारात सेन्सर गरेर शुक्रबार रिलिज गरिन्छ । यस्तो विभेद गर्दा पनि नेपाली फिल्मकर्मी सहेरै बसिरहेका छन्, सामूहिक प्रतिरोध छँदै छैन । नेपाली फिल्मको उन्नतिका लागि के-के न गर्छु भनेर कुर्लिएका सञ्चारमन्त्री गोकुल बाँस्कोटा र विकास बोर्ड अध्यक्ष केशव भट्टराईको आवाज पनि सुक्दै गएको छ ।

# कहिले आउला चेत ?

बहुसंख्यक नेपाली फिल्ममेकर फिल्म बनाउनभन्दा चलाउन हतार गर्छन् । नाम तय भएको हुँदैन, रिलिज मिति तोक्न हानथाप हुन्छ । अशोक शर्मा यही कोटिमा पर्छन् । अघिल्लो दसैंमा *जय भोले* रिलिज हुनासाथ घोषणा गरे- अर्को दसैंमा *रातो टीका निधारमा* चलाउँछु । आफ्नो वितरण कम्पनी डीसीएन र प्रदर्शक चेन क्युएफएक्समा पहुँच भएकाले शर्मासँग प्रायः फिल्ममेकर हच्कन्छन् । हलको शो वितरणमा पनि हालीमुहाली हुन्छ । घोषणा गरेजस्तै यो दसैंको मुखमा *रातो टीका निधारमा* चलाए । दसैंमा एकल रिलिज पाउनु नै भाग्य हो । दुर्भाग्य ! प्रचारप्रसार बढ्तै गरिए पनि पहिलो दिनबाटै हलमा सुक्खा लाग्यो ।

*छक्का-पञ्जा*ले बनाएको कमेडीको बजारको ब्याज खानेबाहेक फिल्मको अर्को खास नियत देखिँदैनथ्यो । साम्राज्ञीराज्यलक्ष्मी शाह, बुद्धि तामाङ, रवीन्द्र झाजस्ता चिनिएका कलाकारको डफ्फा हुँदा पनि दर्शकले सीधै 'रेड कार्ड' देखाए । आशा थियो, शर्माले आत्मालोचना गर्नेछन्, कमजोरी सुधार्ने प्रण गर्नेछन् । तर त्यस्तो कहाँ हुनु, उल्टै उपयुक्त रिलिज डेट चयनमा चुकेकाले फिल्म नचलेको जिकिर गरे । दसैंमा एकल रिलिज पाउँदा पनि यस्तो काइते तर्क !

उनै शर्माले अर्को दसैंमा *अल्लारे २* चलाउने घोषणा गरिसकेका छन् । उनकै समकक्षी एक निर्देशक भन्छन्, "चेत नखुले र रिलिजको राजनीतिभन्दा कन्टेन्ट बलियो बनाउन समय तथा दिमाग खर्चिएनन् भने फेरि यही नियतिको सिकार हुन्छन् ।"

# किशोरीको दुर्दशा

दसैं सकेर राजधानी फर्कंदै गर्दा मन खल्लो भयो । सुमोका अन्य यात्रुबाट थाहा पाइयो, नजिकै गाउँकी १५ वर्षीया किशोरीले भागेर बिहे गरिछन्, त्यो पनि आफूभन्दा दोब्बर उमेरका विवाहित पुरुषसँग । परिवारले स्वीकृति दिएछ । कानुनमा २० वर्ष नपुगी विवाह निषेध छ । बहुविवाह पनि गैरकानुनी हो ।

तामाङ थरकी ती किशोरी मकवानपुरको बकैया गाउँपालिकाकी बासिन्दा हुन् । यो दुर्गम भेग पनि होइन, प्रदेश ३ को राजधानी हेटौंडाबाट २५ किलोमिटर दूरीमा पर्छ । नजिकै स्कुल र गाउँपालिका पदाधिकारीको घर छ । तर त्यति कलिलै उमेरमा दुलही बन्न केहीले छेकेन ।

स्थानीय सरकारको दायित्व विकास निर्माण मात्र पक्कै होइन, चेतनास्तर वृद्धि गरेर समुन्नत समाज बनाउनु पनि हो । तर स्थानीय तहमा बिदा दिन, मनलाग्दी कर असुल्न, सेवासुविधा बढाउन अनि आफ्ना मान्छेलाई ठेक्का दिलाउनबाहेक गाउँपालिका पदाधिकारीको ध्यान अन्त नहुने रहेछ । बकैयामा ती नानीजस्तै सानै उमेरमा बिहे गर्ने अरू धेरै रहेछन् । तर गाउँपालिकाले तिनलाई लक्षित कुनै अभियान चलाएकै छैन । बरू उनीहरू नदेखेझैं गर्दा रहेछन् । 

बालविवाह, बहुविवाह, दाइजो प्रथा, बोक्सी प्रथा, महिला हिंसाजस्ता कुप्रचलन निर्मूल पार्नु स्थानीय निकायको प्राथमिक दायित्व हो । ने

Mahindra
Rise.

## धेरैलाई अफरले लोभ्याउँछ
## तर Scorpio Pik Up रोज्नेले

# अफरभन्दा बढी बचाउँछ

## झन् धेरै फिचर, झन् धेरै फाइदा पाउँछ

**2x पावर**
- > 2.2 mHawk engine with 140 BHP power
- > 320 NM Torque
- > 6 forward + 1 reverse gear transmission
- > Microhybrid Tech

**यो सेगमेन्टमै सबैभन्दा सुरक्षित**
- > Dual Airbags
- > ABS
- > Control lock with remote control and alarm
- > ISOFIX Anchors for child safety

**यो सेगमेन्टमै सबैभन्दा आरामदायी र स्टाईलिश**
- > Air Conditioning
- > Power Window
- > Driver Information Display
- > Hydraulic Bonnet Struts
- > Bluetooth Connectivity
- > Projector Headlamps
- > Rear Demister
- > Fog Lamps




From the makers of SCORPIO
THE NEXT GENERATION
Mahindra
PIKUP
रु. ३७,६०,०००*/- बाट शुरु

AGNI INCORPORATED PRIVATE LIMITED

**Agni Incorporated Pvt. Ltd.** Panipokhari Showroom: 01-4006711/12/13/14/15, 9801239330
Naxal Showroom: 01-4415368, 9801305300, Naxal Bhagwati Bahal Showroom: 9851241085
Patan Showroom: 01-5532641/5532328, 9801303100
**Branch:** Birgunj, Tel: 051-419323/419456, 9801239325, Fax: 051-419259
Bhairahawa, Tel: 071-429324; Itahari, Tel: 025-585742; Kohalpur, Tel: 081-541522

Insurance Partners: NLG, सगरमाथा इन्स्योरेन्स कं. लि. Sagarmatha Insurance Company Ltd. VIP
Genuine Mahindra Four Wheelers Spare Parts · Mahindra MAXIMILE Genuine Lubricants · Mahindra GENUINE ACCESSORIES

**Url:** mahindrapikupnepal.com **Email:** marketing@agnigroup.com.np
**Service Helpline No.:** 16600-100-200 (NTC), 980-157-1212 (Ncell)
www.agnigroup.com.np twitter/AgniGroup instagram/AgniGroup facebook.com/MahindraAgniGroup

